निष्कलोऽनन्तः सच्चिदानन्दविग्रहः ॥६॥ यदेतेदखिलं विश्वं चराचरमतन्द्रितः । माधीशं साश्रयं यत्र यद्वशे नियतं स्थितम् ॥७॥ अथ ते लक्षणं वच्मि ब्रह्मणः परमात्मनः । उत्पत्तिस्थितिसंहारा ह्यावृत्तिर्नियमस्तथा ॥ ८ ॥ प्रकाशो बन्धमोक्षौ च वृत्तिर्यस्याद्भवन्त्यमी । स विष्णुर्ब्रह्मसंज्ञोऽसौ कवीनां शाश्वतो विभुः ॥९॥ साक्षाद्ब्रह्मेति तं प्राहुः पश्चाद्ब्रह्मादिकानपि । ब्रह्मशब्दं सोपपदं ब्रह्मादिषु विदो विदुः ॥१०॥ नान्येषां ब्रह्मता क्वापि तच्छक्त्येकांशभागिनाम् । तदेतच्छास्त्रगम्यं हि जन्माद्यस्य महाविभोः ॥ ११ ॥ शास्त्रं च वेदाः स्मृतयः पुराणं वै सदात्मकम् । इतिहासः

विष्णु सारा शक्तिले पूर्ण, सारा त्रिगुणले परिपूर्ण, साराकाईश्वर, विग्रहादिगुणरहित, स्वच्छ, अनन्त, सत्-चित्-आनन्दस्वरूप हुनुहुन्छ भनिन्छ ॥६॥ अष्टवसु अष्टदिकपालले सहित भएका, साराका आश्रय भएर रहेका, चर अचर वस्तुले भरिएका यो समस्त विश्व छ त्यसलाई तदारुख भएर रक्षा गरिबकिसन्छ, जुन यो विश्व जसको अधीनमा दृढ भएर रहेको छ ॥७॥ अब तिमीलाई परमात्मा ब्रह्मको लक्षण कहन्छु, जसबाट यस विश्वको सृष्टिस्थिति प्रलय, फेरि दोहरिनु र नियमहरूबन्नु ॥८॥ प्रकाश बन्ध मोक्ष र वृत्ति यी हुन्छन्, उनै विष्णु भगवान्लाई ब्रह्म भन्दछन् उसलाई कविहरू अविनाशी ईश्वर र ब्रह्म भन्दछन् ॥९॥ उसलाई साक्षात् ब्रह्म भन्दछन्, पछि ब्रह्म आदिलाई पनि ब्रह्मआदि शब्दमा उपपद लगाएर ब्रह्म शब्दले नै विद्वान्हरू भन्न लागे ॥१०॥ उनै विष्णुका अलि-अलि अंशले बनेका अरू थोताहरूमा ब्रह्मता कहाँ हुन सक्छ र ? जुन भगवान्को उत्पत्ति आदि कुराहरूत बडे-बडे शास्त्राद्वारा नै जान्न सकिन्छ ॥११॥ शास्त्र भनेका वेद, स्मृति तिनका कुराले



पञ्चरात्रं भारतं च महामते ॥१२॥ एतैरेव महाविष्णुर्ज्ञेयो नान्यैः कथञ्चन । नावेदविदमुं विष्णुं मनुते न वरं क्वचित् ॥१३॥ नेन्द्रियैर्नानुमानैश्च न तर्कैः शक्यते विभुम् । ज्ञातुं नारायणं देव वेदवेद्यं सनातनम् ॥ १४ ॥ अस्यैव जन्मकर्माणि गुणान् ज्ञात्वा यथामति । मुच्यन्ते जीवसङ्घाश्च सदा तद्वशवर्तिनः ॥१५॥ क्रमाद्विष्णोश्च माहात्म्यं यथा सातिशयं भवेत् । एकैकस्मिन् स्थितां शक्तिं देवर्षिपितृपादिताम् ॥१६॥ प्रत्यक्षेणागमेनापि तथैवानुमयापि च । आदौ नरोत्तमं विद्याद्बले ज्ञाने सुखं तथा ॥१७॥ तस्माद्भूपं शतगुणं विद्यज्ज्ञानादिभिर्युतम् । भूयान्मनुष्य–

भरिएका पुराण इतिहास पञ्चरात्र महाभारत हुन्, हे महामति ॥१२॥ यिनै शास्त्रहरूले महाविष्णु जानिन्छन्, अरू अज्ञमले शास्त्रहरूले कहिल्यै कसै गरी पनि जानिन्नन्, वेद नजान्नेले यी श्रेष्ठ भगवान् विष्णुलाई कहिल्यै पनि जान्न सक्तैनन् ॥१३॥ वेदले मात्र जानिने सनातन नारायण ईश्वर परमात्मालाई न भौतिक इन्द्रियहरूले न तर्कहरूले नै जान्न सकिन्छ ॥१४॥ यिनै भगवान्का जन्म कर्म आदिगुणहरूलाई यथार्थ तरहले जान्नेप्राणीहरू सांसारिक बन्धनबाट छुट्न सक्दछन् र सधैं भगवान्कै वशमा रहन्छन् ॥१५॥ जसै-जसै विष्णुको माहात्म्य फैलँदै जान्छ, उसरी नै थोता, ऋषि दिव्यपितृहरूमा रहेको शक्ति पनि एक एकमा फैलिँदै जान्छ ॥१६॥ प्रत्यक्षद्वारा शास्त्रद्वारा र अनुमानद्वारा पनि बलमा, ज्ञानमा तथ सुखमा पहिले नरोत्तम भगवान्लाई सर्वोपरि जान्नुपर्छ ॥१७॥ त्यसपछि प्राणीमा ज्ञान आदिले युक्त भएको राजालाई

गन्धर्वांस्तेभ्य आजावजान्सुरान् ॥१८॥ तत्त्वाभिमानिनो देवांस्तेभ्यो विद्याच्छताधिकान् । तत्त्वाभिमानिदेवेभ्यः सप्तैव ऋषयो वराः ॥ १९ ॥ सप्तर्षिभ्यो वरो ह्यग्निरग्नेः सूर्यादयस्तथा । सूर्याद्गुरुर्गुरोः प्राणः प्राणादिन्द्रो महाबलः ॥२०॥ इन्द्राच्च गिरिजा देवी देव्या शम्भुर्जगद्गुरुः । शम्भोर्बुद्धिर्महादेवी बुद्धेः प्राणो बलात्मकः ॥ २१ ॥ न प्राणात्परमं किञ्चित् प्राणे सर्वं प्रतिष्ठितम् । प्राणाज्जातमिदं सर्वं प्राणादेव हि चेष्टितम् ॥ २२ ॥ प्राणे प्रोतमिदं सर्वं प्राणादेव हि चेष्टते । सर्वाधारमिमं प्राहु सूत्रं नीलाम्बुदप्रभम् ॥ २३ ॥ लक्ष्मीकटाक्षमात्रेण प्राणस्यास्य

सयगुणा अधिक ठान्नुपर्छ । राजापछि मनुष्यहरूलाई र गन्धर्वहरूलाई मान्नुपर्छ र यसका बाद किन्नर आदि देवयोनिलाई श्रेष्ठ ठान्नुपर्छ ॥१८॥ ती देवयोनिमन्दा तत्त्वाभिमानी बीताहरूलाई सयगुणा अधिक ठान्नुपर्छ, तत्त्वाभिमानी बीतामन्दा सप्तऋषिहरू श्रेष्ठ छन् ॥१९॥ सप्तर्षिमन्दा अग्निदेव ठूला छन् अग्निमन्दा ठूला सूर्य आदि ग्रह छन्, तिनमा पनि सूर्यमन्दा अधिक बृहस्पति अनि बृहस्पतिमन्दा अधिक वायु र वायुमन्दा अधिक बलवान् इन्द्र छन्॥२०॥इन्द्रमन्दा ठूली पार्वती देवी, पार्वतीमन्दा जगद्गुरु शम्भु ठूला छन् । शम्भुमन्दा पनि महादेवी बुद्धि बढी छन्, बुद्धिमन्दा प्राण अधिक विशिष्ट छ ॥२१॥ प्राणभन्दा श्रेष्ठ अरू क्यै छैन, प्राणमा नै सारा प्रतिष्ठित छ, प्राणैबाट यो सारा सृष्टि भएको छ प्राणबाट नै चहलपहल चेष्टा भैरहेको छ ॥२२॥ सारा यो सृष्टि प्राणमा उनिएको छ, प्राणद्वारा नै सारा सृष्टि चलमलाउँछ । पानी वर्षाउने कालो बादल जस्तो यस प्राणलाई साराको आधार सूत्र हो भन्दछन्॥२३॥लक्ष्मीको अलिकति हेराइ मात्रैले पनि

स्थितिर्भवेत् । व्याध उवाच । सा लक्ष्मीर्देवदेवस्य कृपालेशैकभागिनी ॥ २४ ॥ न विष्णोः परमं किञ्चिन्न समो वा कथञ्चन । कथं जीवेष्वयं प्राणः सूत्रनामाधिकोऽभवत् ॥ २५ ॥ निर्णयो वा कथं ह्यस्य प्राणाधिक्यं कथं विभो । एतदाचक्ष्व मे ब्रह्मन् कथं प्राणाद्विभुः परः ॥२६॥ शङ्ख उवाच । शृणु व्याध प्रवक्ष्यामि यत्पृष्टं निर्णयं त्वया । प्राणाधिक्यं समुद्दृश्य जीवैश्च सकलैरपि ॥२७॥ पुरा नारायणो देवः पद्मसृष्टौ सनातनः सृष्ट्वा ब्रह्मादिकान् देवानिदं प्राह जनार्दनः ॥ २८ ॥ साम्राज्येऽहं स्थापयेयं ब्रह्माणं वः प्रतिप्रभुम् । यो युष्मास्वधिको वेवो

यस प्राणको स्थिति हुन्छ । तब व्याधले भन्यो—ती लक्ष्मी त बीताका पनि बीता विष्णुकी लेश मात्र कृपा भोग्नेवाली हुन् ॥२४॥ विष्णुभन्दा श्रेष्ठ क्यै छैन, न विष्णुका बराबरका नै कुनै कोही छ । भनी तपाईंले भनिसक्नुभो, तब कसरी जीवहरूमा यो प्राण सूत्र नामले अधिक श्रेष्ठ भयो ? ॥२५॥ हे विभु ! प्राणको आधिक्य; प्राण अझ ठूलो हो भन्ने कुरो कसरी भयो ? यदि प्राणै श्रेष्ठ भए फेरि कसरी प्राणभन्दा ईश्वर श्रेष्ठ भए त ? जो कि तपाईंले विष्णुभन्दा ठूलो कोही केही छैन भनिसक्नुभो, हे ब्रह्मन् ! यसको निर्णय कसरी हुन्छ ? मलाई यो कहिदिनुहोस् ॥२६॥ तब शंखले भने—हे व्याध ! जो निर्णय तिमीले सोध्यौ त्यो सकल प्राणीमा प्राणको नै अधिकता छ भन्ने कुरो म भन्छु सुन—॥२७॥ पहिले पद्मकल्पमा सनातन देव जनार्दन नारायणले ब्रह्मादि बीताहरू सृष्टि गरेर यो कुरो भन्नुभयो कि ॥२८॥ म

यौवराज्ये सुरेश्वरः ॥२९॥ अस्थापयत शीलाढ्यं शौर्यौदार्यगुणान्वितम् । इत्युक्ता विभुना देवाः सर्वे शक्रपुरोगमाः ॥३०॥ एवं विवादिनोऽन्योन्यमहं मुख्योऽहं त्विति । सर्वे विवादमापन्नाः सूर्यं केचित्परं जगुः ॥३१॥ शक्रं केचित्परं कामं केचित्तूष्णीं वितस्थिरे । ते निर्णयमपश्यन्तः प्रष्टुं नारायणं ययुः ॥३२॥ नमस्कृत्य पुनः प्राहुः सर्वे प्राञ्जलयोऽमराः । विचारितं महाविष्णो सर्वैरस्माभिरञ्जसा ॥३३॥ नास्मासु देवमधिकं द्रक्ष्यामो हि कथञ्चन । त्वमेव निर्णयं ब्रूहि देवाः संशयिनोऽभवन् ॥३४॥ इति पृष्टोऽमरैः सर्वैः प्रहसन्निदमब्रवीत् । देहादस्माद्वैराजाद्य-

सिपाहीहरूको मालिक बनाएर अक्षालाई साम्राज्यमा स्थापना गर्दछु । सिपाहीहरूमा जो अधिक श्रेष्ठ यौताहरूको संचालक हो त्यसलो शूरता उदारता आदि गुणले युक्त भएको शील स्वभाववाला उसलाई यौवराज पदमा राख । विष्णु ईश्वरले त्यसरी भदाइएका इन्द्र आदि सारा यौताहरू ॥२९–३०॥ परस्परमा 'म ठूलो म ठूलो' भनी कलह गर्न लागे, कलह गर्ने सबमध्ये कसैले सूर्यलाई श्रेष्ठ ठाने ॥३१॥ कसैले इन्द्रलाई र कसैले कामदेवलाई । कति चुपचाप बसे । यसरी कुनै निर्णय हुन नसकेको देखेर ती सबै नारायणसँग सोध्न गए ॥३२॥ त्यहाँ पुगी विष्णुलाई नमस्कार गरी हात जोरेर खडा भएका सबै यौताहरूले हे महाविष्णु ! हामी सबैले खूब विचार्यौं भनी फेरि भने ॥३३॥ हामीहरूमा अधिक यौता हामीले कहीं कतै पनि देखेनौं, सारा यौता संशयमा प्राप्त भए, अब तपाईं नै निर्णय गरेर भन्नुहोस् ॥३४॥ यौताहरूले यसरी

---

सिर्निष्क्रामति ह्ययम् ॥३५॥ पतिष्यति प्रविष्टे तु यस्मिन्वै स्थितो भवेत् । स देवो ह्यधिको नूनं नापरस्तु कथञ्चन ॥३६॥ इत्युक्तास्ते ततः सर्वे तथास्त्विति वचोऽब्रुवन् । निश्चक्राम जयन्ताख्यः पादात्पूर्वं सुरेश्वरः ॥ ३७ ॥ तदा पंगुममुं प्राहुर्न देहः पतितस्तदा । शृण्वन्पिबन्वदञ्जिघ्रन् पश्यन्नास्ते श्वसन्नपि ॥३८॥ पश्चाद्गुह्याद्विनिष्क्रान्तो दक्षो नाम प्रजापतिः । तदा षण्ढममुं प्राहुर्न देहः पतितस्तदा ॥३९॥ शृण्वन्पिबन् वदञ्जिघ्रन् पश्यन्नास्ते चलन्नपि । पश्चाद्धस्ताद्विनिष्क्रान्त इन्द्रः सर्वामरेश्वरः ॥ ४० ॥ हस्तहीनममुं प्राहुर्न

सोधिएका ईश्वरले कत्ति हाँस्तै यस्तो भन्नुभो—यस विराट् शरीरबाट जुन निस्केपछि यो शरीर ॥३५॥ ढल्दछ, उस शरीरमा जुन पसेमा विराट् शरीर जुरुक्क उठ्तछ, त्यही यौता निश्चय नै श्रेष्ठ हो, अर्को कसै गरे पनि श्रेष्ठ हुन सक्तैन ॥३६॥ यसरी भगवान्ले कहिएका ती सबै यौताहरूले तब 'त्यसै नै होस' भन्ने वाणी बोले । तब प्राणीको पयरबाट सबभन्दा पहिले जयन्त नामका यौता निस्के ॥३७॥ त्यसलाई लँगडो भने, त्यो निस्कँदैमा शरीर ढलेन, सुन्दै पिउँदै बोल्दै सुँघ्दै हेर्दै र सास फेर्दै रह्यो ॥३८॥ अनि गुदद्वारबाट दक्ष नामका प्रजापति निस्केर गए, तब उस शरीरलाई नपुंसक भने तैपनि देह ढलेन ॥३९॥ सुन्दै पिउँदै बोल्दै सुँघ्दै हेर्दै चल्दै नै रह्यो । पछि हातबाट सारा यौताका मालिक इन्द्र निस्के

देहः पतितस्तदा । शृण्वन्पिबन् वदञ्जिघ्रन् पश्यन्नास्ते चलन्नपि ॥४१॥ लोचनाभ्यां विनिष्क्रान्तः सूर्यस्तेजस्विनां वरः । तदा काणममुं प्राहुर्न देहः पतितस्तदा ॥४२॥ शृण्वन्पिबन् वदञ्जिघ्रन् खादन्नास्ते चलन्नति । घ्राणात्पश्चाद्विनिष्क्रान्तौ नासत्यौ विश्वभेषजौ । अजिघ्राणममुं प्राहुर्न देहः पतितस्तदा ॥४३॥ शृण्वन् पिबन् वदन् खादन् पश्यन्नास्ते चलन्नपि । श्रोत्राद्दिशो विनिष्क्रान्ता न देहः पतितस्तदा । तदामुं बधिरं प्राहुर्न मृतेति कथञ्चन ॥४४॥ खादन् पिबन् वदञ्जिघ्रन् पश्यन्नास्ते चलन्नपि । वरुणो रसनायास्तु विनिष्क्रान्तस्ततः परम् ॥४५॥

॥४०॥ तब त्यस शरीरलाई डुँडे भने, तब पनि देह ढलेन, सुन्दै पिउँदै बोल्दै सुँघ्दै चलमलाउँदै रह्यो ॥४१॥ तब दुबै आँखबाट तेजस्वीहरूमा श्रेष्ठ सूर्य निक्लेर गए, तब त्यस शरीरलाई सबैले कानो भने, तब पनि देह ढलेन ॥४२॥ सुन्दै पिउँदै बोल्दै सुँघ्दै खाँदै चल्दै रह्यो। पछि नाकबाट नासत्य नामका विश्ववैद्य निक्ले, तब त्यस शरीरलाई घ्राणशक्ति नभएको भने, तैपनि देह ढलेन ॥४३॥ सुन्दै पिउँदै बोल्दै खाँदै देख्तै चल्दै रह्यो ॥ कानबाट दिशाहरू निक्लेर गए, तर देह ढलेन, तब त्यसलाई बहिरो भने, कसै मर्दा पनि मरेको भनेनन् ॥४४॥ खाँदै पिउँदै बस्दै सुँघ्दै हेर्दै चल्दै रह्यो । त्यसका बाद जिब्रोबाट वरुण दौता निस्के ॥४५॥ तब त्यसलाई स्वाद नजान्ने भने, तैपनि देह ढलेन, पिउँदै चल्दै खाँदै जल्दै सास



तदाऽरसज्ञमेवाहुर्न देहः पतितस्तदा । पिबँश्चदन्नादन्नास्ते तथा जानन् श्वसन्नपि ॥४६॥ ततो वाचो विनिष्क्रान्तो वह्निर्वागीश्वरो विभुः । तदा मूकममुं प्राहुर्न देहः पतितस्तदा ॥४७॥ पिबँश्चलन्नदन्नास्ते तथा जानन् श्वसन्नति । पश्चाद्रुद्रो विनिष्क्रान्तो मनसो बोधनात्मकः॥४८॥ तदा जडममुं प्राहुर्न देहः पतितस्तदा । पिबँश्चलन्नदन्नास्ते तथा शृण्वन् श्वसन्नपि ॥४९॥ पश्चात्प्राणो विनिष्क्रान्तो मृतोमेनं तदा विदुः । पुनरेवं तदा प्राहुर्देवा विस्मितमानसाः ॥५०॥ देहमुत्थापयेद्यस्तु पुनरेवं व्यवस्थितः । स एव ह्यधिकोऽस्मासु युवराजो भविष्यति ॥५१॥

फेर्दै रह्यो ॥४६॥ तब वचनबाट वाणीका अधिपति ईश्वर अग्नि निस्के, तब उसलाई लाटो भने, तर देह ढलेन ॥४७॥ पिउँदै चल्दै खाँदै जान्दै सास फेर्दै रह्यो ॥ तब मनबाट आत्मा बोध गराउने रुद्र निस्केर गए ॥४८॥ तब त्यसलाई जड भने,तर देह ढलेन, पिउँदै चल्दै खाँदै सास फेर्दै रह्यो ॥४९॥ सबभन्दा पछि प्राण निस्क्यो, तब भने त्यसलाई सबले मरेको ठाने तब आश्चर्यचकित भएका दौताहरूले फेरि भने ॥५०॥ जो यस शरीरलाई उठाउँछ, हामीहरूमा त्यो नै सर्वश्रेष्ठ हो र त्यै युवराज हुनेछ; फेरि यस्तो अठोट गरियो ॥५१॥ यस्तो अठोट सुनेर फेरि क्रमैले त्यस शरीरमा प्रवेश गर्नेवाले।

इत्येवं तु प्रतिश्रुत्य विविशुश्च यथाक्रमम् । जयन्तः प्राविशत्पादौ नोत्तस्थौ तत्कलेवरम् ॥५२॥
गुदां च प्राविशद्दक्षो नोत्तस्थौ तत्कलेवरम् । इन्द्रो हस्तौ विवेशाय नोत्तस्थौ तत्कलेवरम् ॥५३॥
चक्षुः सूर्यः प्रविष्टोऽभून्नोत्तस्थौ तत्कलेवरम् । दिशः श्रोत्रं प्रविविशु नोत्तस्थौ तत्कलेवरम् ॥५४॥
वरुणः प्राविशज्जिह्वां नोत्तस्थौ तत्कलेवरम् । नासां विविशतुर्दस्रौ नोत्तस्थौ तत्कलेवरम् ॥५५॥
वह्निश्च प्राविशद्वाचं नोत्तस्थौ तत्कलेवरम् । मनसि प्राविशद्रुद्रो नोत्तस्थौ तत्कलेवरम् ॥५६॥
पश्चात्प्राणो विवेशासीत्तदोत्तस्थौ कलेवरम् । तदा देवा विनिश्चित्य ईशं देवाधिकं विभुम् ॥५७॥

पहिले जयन्त पाउमा प्रवेश गन्यो तर त्यो शरीर उठेन ।५२। अनि गुदद्वारमा दक्ष प्रवेश गन्यो त्यो शरीर उठेन तब इन्द्र बाहुमा प्रवेश गन्यो, त्यो देह उठेन ॥५३॥ आँखामा सूर्य पुसे, त्यो शरीर उठेन, कानमा दिशाहरू पसे, त्यो शरीर उठेन ॥५४॥ जिब्रामा वरुण पसे, शरीर उठेन । नाकमा अश्विनीकुमार प्रवेश गरे, त्यो शरीर उठेन ॥५५॥ वचनमा अग्नि पसे त्यो शरीर उठेन । मनमा रुद्र पुसे, त्यो शरीर उठेन ॥५६॥ सबभन्दा पछि प्राणले प्रवेश गन्यो तब शरीर उठ्यो । तब देवताहरूले बीचबाटमा अंशु ईश्वर प्राणलाई निश्चय गरेर ॥५७॥ बलमा ज्ञानमा धैर्यमा वैराग्यमा जीवनमा पनि प्राणलाई



बले ज्ञाने च धैर्ये च वैराग्ये प्राणनेऽपि च । ततोऽभिषेचयाञ्चक्रु र्यौवराज्ये महाप्रभुम् ॥५८॥
उत्कृष्टस्थितिहेतुत्वादुक्थमेकं तदा जगुः । तस्मात्प्राणात्मकं विश्वं सर्वं स्थावर जङ्गमम् । अंशैः
पूर्णैर्बलाढ्यैश्च पूर्णोऽयं जगतां पतिः ॥ ५९ ॥ न प्राणहीनं जगदस्ति किञ्चित्प्राणेन हीनं
न च वै समेधते । प्राणेन हीन स्थितिमन्न किञ्चित्प्राणेन हीनं न च किञ्चिदस्ति ॥६०॥ तस्मात्
प्राणः सर्वजीवाधिकोऽभूद् बलाधिकः सर्वजीवन्तरात्मा । प्राणात्कोऽपि ह्यधिको वा समो वा
शास्त्रे दृष्टः श्रुतपूर्वो न चास्ते ॥६१॥ तत्तत्कार्यानुगः प्राण एको देवो ऽनेकधा ॥६२॥ तस्मा

विशिष्ट ठानेर तब युवराज पदमा महाशक्तिशाली प्राणलाई नै अभिषेक गरे ॥५८॥ प्राण न उत्कृष्ट स्थिति को कारण भएकोले सामवेदले एक मन्त्रले गायो । त्यसकारण सारा स्थावर जङ्गम विश्व नै प्राणात्मक छ। सारा अंशले पूर्ण भएको, बलैबलले भरिएको यो प्राण नै जगत्को पूर्ण मालिक हो ॥५९॥ यदि प्राण छैन भने यो जगत् क्यै जतिको पनि हुँदैन, प्राण नभए कुनै वस्तु पनि बढ्दैन । प्राण नभए कुनै प्राणी पनि स्थितिवाला हुँदैन, प्राण नभए दुनियामा क्यै छैन ॥६०॥ त्यसै कारणले प्राण सबै जीवनमा अधिक मानिन्छ, अति बलियो हुनालेनै सबै प्राणीको अन्तरात्मा भएर रहेको छ। प्राणभन्दा अधिक बलियो अथवा प्राण-बराबर कोही पनि बलशाली न शास्त्रमा देखिएको छ, न पहिले कहल्यै सुनिएको छ ॥६१॥ यौटै प्राण देउता अनेक रूपले भिन्न-भिन्न काम गर्ने भएर रहेको छ ॥६२॥ त्यसै कारणले लौलैले जगतमाई [illegible], जान

त्प्राण वरं प्राहुः प्राणोपासनतत्पराः । लीलयैव जगत्स्रष्टुं हन्तुं पालयितुं प्रभुः ॥६३॥ शेषा हि शिवशक्राद्याश्चेतनाश्च जड़ा अपि । वासुदेवादृदे कोऽपि नैनं परिभविष्यति ॥६४॥ सर्वदेवात्मकः प्राणः सर्वदेवमयो विभुः । वासुदेवानुगो नित्यं तथा विष्णुवशे स्थितः ॥६५॥ वासुदेवप्रतीपन्तु न शृणोति न पश्यति । देवा प्रतीपं कुर्वन्ति रुद्रेन्द्राद्या सुरेश्वराः ॥६६॥ प्रतीपं क्वापि कुरुते न प्राणः सर्वगोचरः । तस्मात्प्राणं महाविष्णोर्बलमाहुर्मनीषिणः ॥६७॥ एवं ज्ञात्वा महाविष्णोर्माहात्म्यं लक्षणं तथा । पूर्वबन्धानुगं लिङ्गं जीर्णं त्वचमिवोरगः ॥६८॥ विसृज्य परमं याति

र पालन गर्नमा सर्वशक्तिमान् भएकोले प्राणको उपासनामा तत्पर रहनेहरू प्राणलाई नै सर्वश्रेष्ठ भन्दछन् ॥६३॥ [illegible] सिवाय कोही पनि अरू शिव इन्द्र आदि चेतन प्राणी र जड़ वस्तुहरू यस प्राणलाई जित्न सक्तैन ॥६४॥ प्राण [illegible] देउताहरूको प्राण हो, सबै देवताको स्वामी हो । सधै वासुदेव भगवान्को सेवक हो र सधै विष्णुका वशमा [illegible] ॥६५॥ वासुदेवको विपरीत चल्नेलाई त यो न सुन्न सक्छ, न देख्न सक्छ । बरु रुद्र इन्द्र आदि बडा-बडा [illegible] भगवान्को विपरीत काम गर्लान् ॥६६॥ तर सबैको अन्तर्यामी प्राण कहिल्यै पनि विपरीत काम गर्दैन । त्यसैले [illegible] प्राणलाई महाविष्णुको बल हो भन्दछन् ॥६७॥ यस्तरी महाविष्णुको महात्म्य र लक्षण जानेपछि पहिलेदेखि नै [illegible] आएको शरीरलाई–सर्पले पुरानु छाला (काँचुली) लाई झैं ॥६८॥ त्यागेर प्राणी अविनाशी नारायणको [illegible] प्राप्त

नारायणमनामयम् । श्रुत्वा शङ्खोदितं वाक्यं पुनर्व्याधः प्रसन्नधीः ॥६९॥ प्रश्रयावनतो भूत्वा पुनः पप्रच्छ तं मुनिम् । ब्रह्मन्महानुभावस्य प्राणस्यास्य जगद्गुरोः ॥७०॥ न स्यात्तो महिमा लोके कथं सर्वेश्वरस्य वै । देवानां च मुनीनां च भूपानां च महात्मनाम् ॥७१॥ महिमा श्रूयते लोके पुराणेषु सहस्रशः । एतदाचक्ष्व मे ब्रह्मञ्ज्ञातुं कौतूहलं हि मे ॥७२॥ शङ्ख उवाच—

पुरा प्राणो हरिं देवं नारायणमनामयम् । अश्वमेधैर्यष्टुकामो गङ्गातीरे ययौ मुदा ॥७३॥

गर्छ । यस्ता प्रकारले शंखले भनेका वाक्य सुनेर भन् प्रसन्न बुद्धि भएको व्याधाले ॥६९॥ निहुरिएर अति नम्र भएर ती मुनिलाई फेरि पनि सोध्यो । हे ब्रह्मन् ! महानुभाव, जगद्गुरु, सबैको ईश्वर भएको यस प्राणको महिमा के कारणले संसार प्रसिद्ध नभएको हो ? देवताहरूको, मुनिहरूको, राजाहरूको र महात्माको पनि ॥७०-७१॥ जताततै पुराणहरूमा हजारौंथरि महिमा सुनिन्छ । हे ब्रह्मन् ! मलाई यो आज्ञा होस्, यताप्नि सुन्ने लालसा (इच्छा) छ ॥७२॥ तब शंखले भने–अघि पूर्व समयमा प्राणले अविनाशी भगवान् हरिलाई अश्वमेधहरूले यज्ञ गर्न चाहेर [illegible] गंगाका किनारमा गए ॥७३॥

वैशा० २११ मा० अ.१९

हलैश्चकार भूशुद्धिं नानामुनिगणैर्युतः । अन्तर्वल्मीकलीनस्तु कण्वो नाम समाधिगः ॥७४॥
हलोत्कृष्टो विनिष्क्रान्तः क्रोधादिदमुवाच ह । दृष्ट्वा पुरः स्थितं प्राणं शशाप ह महाविभुम् ॥७५॥
अद्य प्रभृति विख्याति महिमा भुवनत्रये । तत्र नाप्नोति देवेश भूलोके तु विशेषतः ॥७६॥
अख्यातास्ते भविष्यन्ति ह्यवतारा जगत्त्रये । इत्युक्तो मुनिना तेन वायुः क्रोधात्तथाऽब्रवीत् ॥७७॥
विनाऽपराधं शप्तोऽस्मि तितिक्षुश्च निरागसः । तस्मात्कण्व महाबाहो गुरुद्रोही भवाशु च ॥७८॥

र हलोले भूईंको शुद्धि गर्दै अर्थात् भूईं सम्याए । भूईं सम्याउन हलोले खोस्दा अनेक मुनिका समूहहरूका साथै समाधि कसी धमिराको गोलाभित्र छिपेका कण्व नामका मुनि ॥७४॥ हलोको फालीले उछिट्टयाइएर बाहिर निस्किए त महाविभु प्राणलाई अगाडि उभिएको देखेर क्रोधले यसो भन्दै सरापे ॥७५॥ हे देवेश प्राण ! अब उप्रान्त तीनै भुवनमा र विशेषगरेर पृथ्वीतलमा तिमी महिमा र प्रसिद्धि पाउनेछैनौ ॥७६॥ तीनै भुवनमा तिम्रा नाना अवतारहरू मात्र प्रख्यात हुनेछन् । यसरी ती मुनिले सरापिएको प्राणको क्रोधले जाज्वल्य भएर भन्यो— ॥७७॥ निरपराधी सहनशील मलाई विनै अपराध कुनै कसूर नभैकन सराप्यौ, त्यसकारण हे महाबाहु कण्व ! तिमी पनि तुरुन्तै गुरुद्रोही भए ! ॥७८॥ लोकमा तिम्रो निन्दित

---



लोके निन्दितवृत्तिश्च भवेत्याह सदागतिः । ततः प्रभृति लोकेऽस्मिन् प्राणस्यास्य महाप्रभोः ॥७९॥
न ख्याती महिमा लोके भूर्लोके तु विशेषतः । शापात्कण्वो गुरुद्रोही सूर्यशिष्योऽभवत्तदा ॥८०॥
इत्येतत्कथितं सर्वं यत्पृष्टं तु त्वयाऽधुना । यच्छ्रोतव्यमितो व्याध पृच्छ मां मा विचारय ॥८१॥
इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे वायुशापकथनं नाम एकोनविंशोऽध्याय ॥१९

वृत्ति होस् भनी प्राणले भने, त्यहाँदेखि यस लोकमा यो महाप्रभु ठूलो शक्तिशाली प्राणको ॥७९॥ महिमा तीनै लोकमा र विशेषगरेर पृथ्वीतलमा प्रसिद्ध छैन । प्राणको सरापका कारण गुरुद्रोही भएका कण्व तब सूर्यका शिष्य भए ॥८०॥ तिमीले अहिले जो सोध्यौ त्यो सब मैले बताएँ । हे व्याधा ! तिमीलाई जो सोध्नु छ, मसंग सोध ! नसोच अर्थात् सोध्न अप्ठ्यारो नमान ॥८१॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यको नारद र अम्बरीषको संवादमा वायु-शाप कथन नामको उन्नाइसौं अध्याय सकियो ॥ १९ ॥

# अथ विंशोऽध्यायः

व्याध उवाच–किं जीवा विभुना सृष्टा कोटितोऽथ सहस्रशः । देहद्वारेण वा सृष्टाः सृष्टाश्चेति विनिश्चितम् ॥१॥ दृश्यन्ते भिन्नकर्माणो नानामार्गाः सनातनाः । नैकस्वभावा एते हि कृत एव महामते ! तदेतत्पृच्छते मह्यं विस्तरात्तत्त्वतो वद ॥ २ ॥ शङ्ख उवाच–त्रिविधा जीवसङ्घा हि रजःसत्त्वतमोगुणाः । राजसा राजसं कर्म तामसास्तामसं तथा ॥३॥ सात्त्विका सात्त्विकं कर्म कुर्वन्त्येते यथाक्रमम् । क्वचिच्च गुणवैशम्यमेतेषां संसृतौ भवेत् ॥४॥ तेनैवोच्चावचं कर्म

व्याधाले भन्यो—विभु परमात्माले हजारौं अथवा कोटियौं जो जीवहरू सृष्टि गर्नुभो, के उहाँले शरीरद्वारा सृष्टि गर्नुभो ? अथवा अरू नै कुनै निश्चित उपायले सृष्टि गर्नुभो ?॥२॥ हे महामती मुनि ! किन यी जीवहरू कोही सनातनी कोही नाना सम्प्रदायमा लागेका भिन्न-भिन्न कर्मवाला देखिन्छन् ? के कारणले गर्दा यी एकै स्वभावका भएनन् ? यस्तो सोध्ने भएको मलाई विस्तारपूर्वक यस कारण यो यस्तो भएको हो भन्ने प्रष्ट खुलाई ती सब कुरा बताइबक्सियोस् ॥ २ ॥ तब शङ्खले भने–यी जीवसमुदाय आफ्नो गुणअनुसार रजोगुणी, सत्त्वगुणी र तमोगुणी तीन प्रकारका छन् । रजोगुणवाला राजस कर्म तमोगुणवाला तामस कर्म र॥३॥सत्त्वगुणवाला सात्विक कर्म गर्दछन् । कहीं-कहीं यी गुणहरूको छ्यासमिस भएमा गुण-अनुसारको कर्ममा पनि विषमता (तलमाथि) हुन्छ ॥४॥ त्यसैले ऊँच-नीच कर्म गर्नेहरू कर्म-अनुसारको फल





कुर्वतः फलभागिनः । क्वचित्सुखं क्वचिद्दुःखं क्वचिच्चोभयमेव च ॥५॥ गुणानामेव वैषाम्यात् प्राप्नुवन्ति नरा इमे । प्रकृतिस्था इमे जीवा बद्धा एतैर्गुणैस्त्रिभिः ॥६॥ गुणकर्मानुरूपेण कर्मणां व्यत्ययः फलम् । गुणानुगुणभूयस्ते प्रकृतिं यान्त्यमी जनाः ॥७॥ प्रकृतिस्थाः प्राकृतिजा गुणा कर्माभिसंवृताः । गतिं प्राकृतिकीं यान्ति व्यत्ययः प्रकृतेर्न हि ॥८॥ तामसा दुःखबहुलाः सदा तामसवृत्तयः । निर्दया निष्ठुराः क्रूरा लोकद्वेषैकजीविनः ॥९॥ राक्षसाद्याः पिशाचान्तास्तामसीं यान्ति वै गतिम् । राजसा मिश्रमतयः कर्तारः पुण्यपापयोः ॥१०॥ पुण्यात्स्वर्गं प्राप्नुवन्ति

भोग्ने हुन्छन् । कहीं सुख, कहीं दुःख र कहीं दुवै भोग्छन् ॥५॥ गुणको विषमताले गर्दा नै मनुष्यहरू यी सुख-दुःखादि पाउँछन् । प्रकृतिमा रहेका यो जीवहरू यिनै तीन गुणहरूले बाँधिएका छन् ॥ ६ ॥ गुण र कर्मको अनुसारले कर्मको फल उल्टोपाल्टो हुन्छ । तिनै गुण र अनुगुणको प्राचुर्यले गर्दा यी मनुष्यहरू प्रकृति (स्वभाव) मा प्राप्त हुन्छन्॥७॥ प्रकृतिस्थ मनुष्यहरू प्राकृतिक गुण र कर्महरूले ढाकिएका हुन्छन् र प्राकृतिक गति नै प्राप्त गर्दछन् । प्रकृतिको नाश कदापि हुन सक्तैन!॥८॥तमगुणीहरू सदा तामसवृत्तिका अर्थात् नीच कर्म गर्ने; एकदम दुःखी, निर्दयी, निष्ठुर,क्रूर र झगडा-रगडाले नै जीवन बिताउने हुन्छन्॥९॥ राक्षसदेखि लिएर पिशाचसम्मका प्राणीहरू तामसी गति प्राप्त गर्छन् । रजोगुणीहरू रजोगुण र तमोगुण मिलेको बुद्धि भएका हुन्छन् र यस्ता जन पुण्य-पाप दुवै कर्म गर्दछन्॥१०॥ पुण्यले स्वर्ग प्राप्त गर्दछन् र कतै

क्वचित्पापाच्च यातनाम् । अत एते मन्दभाग्या आवर्तन्ते पुनः पुनः ॥ ११ ॥ धर्मशीला दयावन्तः श्रद्धावन्तोऽनसूयकाः । सात्त्विकाः सात्त्विकीं वृत्तिमनुतिष्ठन्त आसते ॥१२॥ ते चोर्ध्वं यान्ति विमला गुणापाये महौजसः । अतो विभिन्नकर्माणो नानारूपाः पृथग्धियः ॥१३॥ गुणकर्मानुरूपेण तेषां विष्णुर्महाप्रभुः । कर्माणि कारयत्यद्धा स्वस्वरूपाप्तये विभुः ॥ १४ ॥ विष्णोर्वैषम्यनैर्घृण्ये पूर्णकामस्य वै न हि । सृष्टिं स्थितिं हृतिं चैव समावेत्र करोत्ययम् ॥१५॥ स्वगुणानुगुणा एते कर्मणः फलभागिनः । आरामोक्तान् यथा सर्वा समं वर्षयति द्रुमान् ॥१६॥

पापले नरकको यातना पनि भोग्छन् । यसै कारणले यी अभागीहरू बार बार जन्म लिइरहन्छन् ॥११॥ धर्मात्मा, दयालु, श्रद्धावान् अरूको निन्दा चर्चा नगर्ने यस्ता सात्त्विक प्राणीहरू सात्त्विक व्यवहार गरेर रहन्छन्॥१२॥पापरहित, निर्मल ठूलो प्रभाववाला ती मनुष्यहरू शरीर छुटेपछि वैकुण्ठ जान्छन् । यिनै गुण र मिश्रित गुणले गर्दा नै प्राणीहरू भिन्न-भिन्न कर्म गर्ने, अनेक किसिमका रूप धर्ने, अलग-अलग बुद्धि भएका हुन्छन्॥१३॥तिनीहरूको गुण र कर्मको अनुसार नै महाप्रभु विष्णु भगवान्ले आ-आफ्नू रूप अनुसार फल मिल्ने कर्महरू एक-एक गरी गराउँछन् ॥१४॥ सबै मनोरथहरूले टन्च विष्णु भगवान्का लागि विषमता र घृणा क्यै छैन । यी विष्णु समान तरहले सृष्टि स्थिति र नाश गर्दछन्॥१५॥आफ्नू गुण र अनुगुण अनुसार यी जन कर्मका फलभागी हुन्छन् । जस्ता किसिमले बगैंचामा रोपेका सबै वृक्षहरूका उपर समान वर्षा हुन्छ ॥१६॥त्यस्तै भगवान् पनि सबैमा समान हुनुहुन्छ । परन्तु यौटै कुलोबाट जल सेचिएका वृक्षहरू हाँगा-बिंगा नमिलेका



एकल्यकालजा व्यङ्गां द्रुमाश्च प्रकृतिं गताः नारामोक्षति वैषम्यं नैर्घृण्यं वा कदाचन ॥१७॥ व्याध उवाच । जनानां पूर्णभोगानां कदा मुक्तिर्भवेन्मुने । सृष्टिकालेऽथवा ह्यन्तकाले वा स्थापनस्य च ॥१८॥ क्वचिच्च सृष्टिकालस्य संहारस्यापि वै स्थितेः । एतद्विस्तार्य मे ब्रह्मन् भगवच्चेष्टितं वद ॥१९॥ शङ्ख उवाच । चतुर्युगसहस्राणि ब्रह्मणो दिनमुच्यते । रात्रिश्च तावती तस्य ह्यहोरात्रं दिनं भवेत् ॥ २० ॥ दशपञ्च दिनान्याहुः पक्षंमासो द्वयात्मकः । मासद्वयमृतुं प्राहुरयनं च ऋतुत्रयम् ॥ २१ ॥ अयने द्वे वत्सरः स्यात्तादृक् शतसमा यदि ।

भिन्न-भिन्न रूपका हुन्छन, तर बगैंचा लाउनेमा कहिल्यै पनि घृणा र विषमता हुँदैन, त्यस्तै भगवान्मा पनि घृणा र विषमता हुँदैन ॥१७॥ तब व्याधाले भन्यो–हे मुनि ! पूर्ण भोगवाला मनुष्य मुक्ति सृष्टिकालमा, संहारकालमा अथवा स्थितिकालमा कहिले हुन्छ ? ॥१८॥ सृष्टि, संहार र स्थितिको समय कति हो ? हे ब्रह्मन् ! भगवान्को यो चेष्टा । विस्तार पूर्वक मलाई आज्ञा होस्॥१९॥शंखले भने–चार हजार युगले ब्रह्माको दिन हुन्छ, अनि ब्रह्माको रात पनि त्यति नै समय हुन्छ, यस्को दिन-रात दुवै मिलेर एक दिन हुन्छ॥२०॥त्यस्ता पन्ध्र दिनको एक पक्ष र दुइ पक्षको एक महीना हुन्छ । दुइ महीनाको एक ऋतु हुन्छ र तीन ऋतुको एक अयन हुन्छ ॥२१॥ दुइ अयनको एक वर्ष हुन्छ, त्यस्ता सय वर्ष जब

गच्छन्ति ब्राह्मणो ह्यस्य ब्रह्मकल्पं तदा विदुः ॥२२॥ तावान् हि प्रथमः कल्प इति वेदविदां मतम् । प्रलयस्त्रिविधः प्रोक्तो मानवो मानवात्यये ॥ २३ ॥ दैनन्दिनो द्वितीयो हि ब्रह्मणो दिवसात्यये । ब्रह्मणोऽथ लये पश्चाद्‌वाह्यं च प्रलयं विदुः ॥ २४ ॥ ब्रह्मणस्तु मुहूर्तं तु मनोस्तु प्रलयं भवेत् । प्रलयेषु व्यतीतेषु चतुर्दशसु वै क्रमात् ॥२५॥ दैनंदिनलयं प्राहु प्रलयानां स्थितिः पुनः । त्रयाणामेव लोकानां लयो मन्वन्तरो भवेत् ॥२६॥ चेतानानां तदा नाशो न लोकानां क्षयो भवेत् । उदकैरेव पूर्तिश्च यथापूर्वं तथा पुनः ॥ २७ ॥ मन्वन्तरान्ते

यी ब्रह्माका बिचहन तब त्यति समयलाई 'ब्रह्मकल्प' भन्दछन् ॥२१॥ वेद जान्नेहरूले त्यतिलाई नै ब्रह्माको पहिलो कल्प हो भन्ने मानेका छन् । मानवका दैनन्दिन र महाप्रलय गरी तीन किसिमको प्रलय हुन्छ भनी कहिएको छ । पहिलो मानव प्रलय मनुष्यको नाश हुँदा हुन्छ । दोस्रो दैनन्दिन प्रलय ब्रह्माको दिन सकिंदा हुन्छ । सबभन्दा पछि ब्रह्माको लय हुँदा बाह्य प्रलय अर्थात् महाप्रलय हुन्छ भन्छन् ॥२३-२४॥ ब्रह्माको एक मुहूर्त (दुइ घडी) ले मनुको प्रलय हुन्छ । यसै गरी क्रमले चौध प्रलय बित्दा ॥२५॥ एक दैनन्दिन लय हुन्छ भन्छन् । अझै म प्रलयको स्थिति कहन्छु– प्रत्येक मन्वन्तरमा तीनै लोकको नाश हुन्छ ॥२६॥ तर यो मन्वन्तरी नाशमा प्राणी मात्रको नाश हुन्छ, संसारको नाश हुँदैन । यस नाशमा संसार पानीले डुब्छ र पछि फेरि जस्तो थियो उस्तै हुन्छ ॥२७॥ मन्वन्तर प्रलय सकिएपछि फेरि





भूयात्तु चेतनानां पुनर्भवः । दैनंदिनलये व्याध सर्वस्यापि क्षयो भवेत् ॥ २८ ॥ सत्यलोकं विना सर्वे लोका नश्यन्ति सा धपाः । सचेतनाः साधिभूता प्रसुप्ते चतुरानने ॥ २९ ॥ तत्त्वाभिमानिनो देवा ब्रह्मलोके व्यवस्थिताः । शिष्यन्ति सुप्ताः सर्वेऽपि सत्यलोकव्यवस्थिताः॥३०॥ तिष्ठन्ति सुप्तिमापन्ना यावत्कल्पमतन्द्रिताः । पुनर्निशात्यये ब्रह्मा यथापूर्वमकल्पयत् ॥३१॥ ऋषीन् देवान् पितॄल्लोकान् धर्मान् वर्णान् पृथक् पृथक् । पुनर्दशावतारा हि विष्णोर्देवस्य चक्रिणः ॥ ३२ ॥ नियमेन भवन्त्येते तथान्येऽपि च भूरिशः । देवता ऋषयश्चैव आकल्पं च गिरांपते: ॥३३॥ पुनरेवाभिवर्तन्ते ब्रह्मणा सह मुक्तिगाः । भूयाश्च साधवो ये च सिद्धि

चेतन प्राणीहरूको उत्पत्ति हुन्छ । हे व्याधा ! दैनन्दिन लयमा चाहिं लोकसहित सबै प्राणीको नाश हुन्छ ॥२८॥ब्रह्माजी सुतेपछि सत्यलोकलाई छाडेर चेतन प्राणी र अचेतन पदार्थ सारा दिक्पालसहित सबै लोक नाशिन्छन् । तत्त्वाभिमानी देवताहरू सबै ब्रह्मलोकमा गएर रहन्छन् अनि सत्यलोकमा रहर सुतेका जति सबै बस्तछन् ॥३०॥ मस्त भई सुतेका जति कल्पभरि नै त्यहीं रहन्छन् । रातबितेपछि ब्रह्माजीले फेरि पहिले झैं सृष्टि गर्नुहुन्छ ॥३१॥ ऋषि, देवता, पितृ लोक धर्म भिन्न-भिन्न वर्ण, फेरि चक्रधारी भगवान् विष्णुको दश अवतार॥३२॥यो सब नियमैले हुन्छन्, त्यस्तै अरु पनि धेरै देवता र ऋषिहरू कल्पपर्यन्त ब्रह्माजीसाद॥३३॥ बारम्बार सृष्टि भैरहन्छन्, पहिलेका मुक्त [illegible], राजाहरू साधुहरू र

शाप्ताः परं गताः ॥ ३४ ॥ तेनैव चाभिवर्तन्ते सत्यलोकऽव्यवस्थिताः । तद्राशिगाः पुनर्यान्ति तन्नाम्ना श्रुतिसंस्थिताः ॥३५॥ तत्तद्गोत्रेषु जायन्ते तत्तत्कर्मरताः सदा । दैत्यानामपि सर्वेषां यदा कलियुगात्ययः ॥३६॥ कलिना सह गच्छन्ति यां गतिं निरयालयाः । तेषां च राशिसंस्था ये तन्नमानोऽपरेऽपि च ॥३७॥ जायन्ते कर्मणा स्वेन तत्तत्कर्मविधायकाः । सृष्टिकालं प्रवक्ष्यामि मुक्तिकालं तथैव च ॥३८॥ ब्रह्मादीनां च देवानां समाहितमना भव । निमेष देवदेवस्य ब्रह्मकल्पसमो मतः ॥३९॥ तस्यावसाने चोन्मेषो देवदेवशिखामणेः । निमेषान्ते भवेदिच्छा स्रष्टुं

जो सिद्धि पाएका छन्, परम पदमा पुगेका छन् ती सबै तीनै ब्रह्माजी का साथसाथै फेरि जान्दछन् र सत्यलोकमा गएर रहन्छन् । त्यस-त्यस राशिमा जानेहरू फेरि उसै-उसै नाले उहीं-उहीं जान्छन् । वैदिक कर्मिष्ठहरू पनि ॥३४-३५॥ त्यसै-त्यसै गात्रमा जन्मन्छन् र आफाफ्ना कर्ममा सदा रत ( तल्लीन रहन्छन्) । जब कलियुग बित्छ, कलिकै साथमा जुन गतिमा प्राप्त हुन्छन् ती सबै दैत्यहरूको पनि नारकीय स्थान छन्, तिनीहरूका पनि राशिस्थिति छन्, जो उस नामका अरू-अरू नामका पनि॥३६-३७॥ आफाफ्ना कर्मले जन्मछन्, ती त्यस्तै-त्यस्तै कर्म गर्नेवाला हुन्छन् । ब्रह्मादि दौताहरूको पनि सृष्टि काल र त्यस्तै मुक्तिकाल बताउँछु, एकचित्त भएर सुन । देवदेव ईश्वरको एक झिम्काइमा ब्रह्माको एक कल्प बराबर हुन्छ मानिन्छ ॥३८-३९॥ त्यस कल्पका अन्तमा दौताका पनि दौतामा श्रेष्ठ भगवानको उन्मेष अर्थात् [illegible]

लोकांश्च कुक्षिगान् ॥४०॥ सोऽपश्यत्स्वोदरे सर्वान् जीवसङ्घाननेकशः । सृज्यान्मुक्तानमुक्तांश्च लिङ्गभङ्गमुपागतान् ॥४१॥ सुप्ताः सृतिस्थाः सर्वेऽपि तमोगा अपि सर्वशः । पूर्वकल्पे लिङ्गभङ्गमापन्ना विधिपूर्वकाः ॥४२॥ मानवान्ता जीवकोशा जीवन्मुक्तश्च मुक्तिगाः । पूर्वकल्पे विमुक्ताश्च ब्रह्माद्या मानवान्तकाः ॥४३॥ ध्यानसंस्था हि तिष्ठन्ति विष्णुकुक्षिगता अपि । उन्मेषप्रथमे भागे चतुर्व्यूहात्मको विभुः ॥४४॥ भूत्वा तु पूर्वषाड्गुण्याद्वासुदेवाच्च व्यूहगात् । दत्त्वा तु ब्रह्मणे मुक्तिं सायुज्याख्यां महाविभुः ॥४५॥ दत्त्वा तदनु सायुज्यं तत्त्वज्ञानं महात्मनाम् । सारूप्यं चैव केषाञ्चि-

आँखा खोलाइ हुन्छ । झिम्मको बाद आँखा लेखोपछि भुँडीभित्र राखेका लोकहरूलाई फेरि सृष्टि गर्ने इच्छा हुन्छ ॥४०॥जसै इच्छा भयो, तब भगवान्ले आफ्नो पेटभित्र सृष्टि गर्न योग्य, मुक्त, अमुक्त शरीर त्याग गरेका अनेक, किसिमका सारा जीवसमुदायलाई देखे॥४१॥ सुतेका आगेका सारा हर तरहका तमोगुणीहरू र पूर्वकल्पमा विधिपूर्वक शरीर त्यागेका हरू ॥४२॥ मनुष्यलगायत सारा प्राणीहरू, जीवन्मुक्त र मुक्तहरू अति पूर्वकल्पमा भएका विमुक्तहरू, त्यस्तै ब्रह्मा आदि दौतादेखि मनुष्य पर्यन्तका ॥४३॥ सारा प्राणी विष्णु भगवान्को भुँडीभित्र रहँदा पनि ध्यानमा लीन नै रहन्छन् । अन्मेष (आँखा खोलाइ) को पहिलो भागमा चार व्यूहरूप आत्मावाला भगवान् ॥४४॥ पहिले छः गुणवाला भएर व्यूहरूपमा प्राप्त भएका वासुदेव रूपले ब्रह्मालाई सायुज्य नामको मुक्ति दिएर महाविभुले ॥४५॥ त्यसका बाद महात्माहरूलाई सायुज्य

त्सामीप्यं च विभुः ॥४६॥ सालोक्यं च यथान्यायं दत्वा देवो जनार्दनः । अनिरुद्धवशे सर्वान् स्थिताँल्लोकानलोकयत् ॥४७॥ प्रद्युम्नस्य वशे दत्वा सृष्टिं कर्तुं मनो दधे । मायां जयां कृतिं शान्तिमुपयेमे स्वयं हरिः ॥ ४८ ॥ चतुर्व्यूहैः पूर्णगुणैर्वासुदेवादिकैः क्रमात् । ताभिर्युक्तो महाविष्णुश्चतुर्व्यूहात्मको विभुः ॥ ४९ ॥ भिन्नकर्माश्रयं लोकं पूर्णकामो व्यजीजनत् । उन्मेषान्ते पुनर्विष्णुर्योगमायामुपाश्रितः ॥५०॥ सङ्कर्षणादव्यूहगाच्च हरत्येतच्चराचरम् । तदेतत्सर्वमाख्यतं कार्यं चिन्त्यं महात्मनः ॥५१॥ यदचिन्त्यं दुर्विभाव्यं ब्रह्माद्यैरपि योगिभिः ॥ व्याध उवाच–के

तत्वज्ञान दिएर र कसैलाई सारूप्य मुक्ति दिएर तब विभुले कसैलाई सामीप्य ( आफ्नु समीपको वास ) दिएर॥४६॥त्यस्तै कसैलाई यथायोग्य सालोक्य मुक्ति दिएर भगवान् जनार्दनले सकल लोकलाई अनुरुद्धको वशमा राखेर हेर्नुभयो र ॥४७॥ अनि प्रद्युम्नको वशमा दिएर सृष्टि गर्नमा मन दिनुभयो । तब स्वयं भगवानले माया, जया, कृति, शान्तिलाई विहागर्नुभयो ॥४८॥ चतुर्व्यूह, पूर्णगुण, वासुदेव, व्यूहग यो रूपले क्रमैले माया, जया, कृति, शान्तिले युक्त भएका महाविष्णु
भयो ॥४८॥ चतुर्व्यूह, पूर्णगुण, वासुदेव, व्यूहग यो रूपले क्रमैले माया, जया, कृति, शान्तिले युक्त भएका महाविष्णु
परमेश्वर नै चतुर्व्यूहात्मक भनिनुहुन्छ ॥४९॥सारामनोरथले परिपूर्णभगवानले भिन्न-भिन्नकर्म र आश्रय भएको लोकसृष्टि गर्नु भयो । आँखा हेराइ खतम भएपछि झिम्म गर्ने वेलामा फेरि भगवान् विष्णु योगमायामा आश्रयलिएर॥५०॥संकर्षण व्यूहमा रहेर यो सारा चर-अचर सृष्टिलाई नाश गर्नुहुन्छ । ब्रह्मा आदि धीताहरूले र योगीहरूले पनि गर्न नसकिने,सोच्नै

---



वा भागवता धर्माः कैर्विष्णुश्च प्रसीदति ॥५२॥ तानहं श्रोतुमिच्छामि सांप्रतं वद नो मुने । शङ्ख उवाच–येन चित्तविशुद्धिः स्याद्यः सतामुपकारकः ॥ ५३ ॥ तं विद्धि सात्विकं धर्मं यश्च केनाप्यनिन्दितः । श्रुतिस्मृत्युदितो यस्तु यदि निष्कामिको भवेत् ॥५४॥ यस्तु लोकविरुद्धोऽपि तं धर्मं सात्विकं विदुः । चतुर्विधा हि ते धर्मा वर्णाश्रमविभागतः ॥५५॥नित्यनैमित्तिका काम्या इति ते च त्रिधा मताः । ते सर्वे स्वस्वधर्माश्च यदा विष्णौ समर्पिताः ॥५६॥तदा वै सात्विकाज्ञेया धर्मा भागवताः शुभाः । ये देवान्तर दैवत्याः सकामा राजसा मताः ॥५७॥ यक्षरक्षः पिशाचादि-

नसकिने यी सब कहिएका कामहरू उस महात्माका सोचिने र गरिने छन् तब व्याधाले भन्यो—भागवत धर्म भनेका के हुन् ! र के-कले विष्णु भगवान् खुश हुनुहुन्छ ? ॥५१-५२॥हे मुनि ! अब म ती कुराहरू सुन्न चाहन्छु,कहिदिनुहोस् । तब शङ्खले भने—जुन धर्मले चित्त शुद्ध हुन्छ, जुन धर्म साधुसज्जनहरूको उपकार गर्ने हुन्छ ॥५३॥ जो धर्म श्रुति-स्मृतिले कहिएको हुन्छ, जो धर्म कुनै पनि सत् शास्त्रले निन्दा नगरिएको हुन्छ र यदि त्यो निष्कामको छ भने त्यस धर्मलाई सात्विक धर्म हो भन्ने जान ॥५४॥ जो कामरनाहित गरिने धर्म छ यदि त्यो व्यवहार भए पनि त्यसलाई सात्विकधर्म भन्दछन् । ती धर्महरू पनि वर्ण र आश्रमको विभागले गर्दा चार प्रकारका छन्॥५५॥फेरि ती चार प्रकारका धर्म पनि प्रत्येक नित्य, नैमित्तिक र काम्य गरी तीन प्रकारको मानिएको छ । ती सबै आफ्ना-आफ्ना धर्महरू जब विष्णुमा समर्पण गरिन्छन्॥५६॥ तब ती सब सात्विक धर्म कल्याणकारी भागवत धर्म कहिन्छन् । जो धर्म इच्छापूर्तिका लागि गरिएका छन् र धौतालाई

दैत्या लोकनिष्ठुराः । हिंसात्मकानिन्दिताश्च धर्मास्ते तामसाः स्मृताः ॥५८॥ सत्वस्थाःसात्विकान् धर्मान् विष्णुप्रीतिकराञ्छुभान् । कुर्वन्त्यनीहयानित्यं ते वै भागवताः स्मृताः ॥५९॥ येषां चित्ते सदाविष्णुजिह्वायां नाम वै हरे । पादौ च हृदये येषां ते वै भागवताः स्मृताः ॥६०॥ सदाचाररता ये च सर्वेषामुपकारकाः । सदैव ममताहीनास्ते वै भागवताः स्मृताः ॥६१॥ येषां च शास्त्रे विश्वासो गुरौ साधुषु कर्मसु । ये विष्णुभक्तः सततं ते वै भागवताः स्मृताः ॥ ६२ ॥ येषां हि सम्मता धर्माः शाश्वता विष्णुवल्लभाः । श्रुतिस्मृत्युदिता ये च ते धर्माः शाश्वता मताः ॥६३॥

अर्पण गरिन्छन् ती राजस धर्म कहिन्छन् ॥५७॥ यक्ष, राक्षस पिशाचादि देवयोनिलाई खुशी पार्ने, प्राणी मात्रमा निर्दयी हिंसाप्रधान भएका निन्दनीय घिनलाग्दा जो धर्म छन् ती तामसधर्म कहिन्छन् ॥५८॥ सत्वगुणीमानिसहरू विष्णुलाईखुशी तुल्याउने, कल्याणकारी सात्विक धर्महरू कामनारहित भएर रोजै जो गर्दछन् ती भागवत धर्म कहिन्छन् ।.५९॥ जसको चित्तमा सधैंभरि विष्णु रहन्छन्, जसको जिब्रोमा सधैं हरिको नाम रहन्छ, जसको हृदयमा हरिका चरणकमल रहन्छन् ती नै भगवान्का भक्त कहिन्छन् ॥ ६० ॥ जो जन सधैं असल आचरण, मात्र गर्दछन जो प्राणीमात्रको उपकार गर्नेवाला छन, जो सधैं नै ममता ( मेरो मेरो पनले ) हीन छन् ती नै मनुष्य भगवान्का भक्त कहिन्छन् ॥६१॥ जो मनुष्यको शास्त्रमा, गुरुमा, साधुजनमा र सत्कर्ममा विश्वास छ र जो हमेशा विष्णुका भक्त छन् ती नै मानिस भगवान्का भक्त कहिन्छन् ॥६२॥ जुन श्रुतिस्मृतिले कहिएका धर्म छन् ती धर्म शाश्वत



अटनं सर्वदेशेषु वीक्षणं सर्वकर्मणाम् । श्रवणं सर्वधर्माणां विषयासक्तचेतसाम् ॥ ६४ ॥ अकिञ्चित् करमेतेषां षण्ढस्येव वरस्त्रियः । साधूनां दर्शनेनैव मनो द्रवति वै सताम् ॥ ६५ ॥ चन्द्रस्य कौमुदीसङ्गाच्चन्द्रकान्ताशिला यथा । क्वचित्सच्छास्त्रश्रवणाद्विषयेभ्यश्चलं मनः ॥ ६६ ॥ तिष्ठत्येव सतां पुंसां तेजोरूपमकल्मषम् । पद्मबन्धोः प्रभासङ्गात्सूर्यकान्तशिला यथा ॥ ६७ ॥ निष्कामैर्हि जनैर्यस्तु श्रद्धया समुपाश्रिताः । यो विष्णुवल्लभो नित्यं धर्मो भागवतो मतः ॥ ६८ ॥ तेदृष्टा बहवो धर्मा इहाऽमुत्र फलप्रदाः । विष्णुप्रीतिकराः सूक्ष्माः सर्वदुःखविमोचकाः ॥ ६९ ॥

कहिन्छन् । विष्णुका प्रिय यस्ता शाश्वत धर्म जसका प्रिय छन् ती भगवान्का भक्त ठानिन्छन् ॥६३॥ जस्तो नपुंसकका लागि सुन्दर स्त्रीहरू बेकार छन् त्यस्तै यी विषयमा आसक्त चित्त भएकाहरूका लागि पनि सारा देशको घुमाइ, सारा कर्मको देखाइ, सारा धर्मको सुनाइ बेकारको हुन्छ किनकि भगवान्का भक्त साधु जनहरूको दर्शनलेमात्र सज्जनहरूको मन पग्लिजान्छ ॥६४-६५॥ चन्द्रमाको चाँदनी पाएर चन्द्रकान्त पत्थर झैं कहिलेकाहीं चञ्चल मन पनि असल शास्त्रको श्रवणले विषयहरूबाट विरक्तिएर भक्तिमार्गमा लागेझैं साधुहरूको संगतले सज्जनको मन पग्लछ ॥६६॥साधुहरूको संगतले सज्जन पुरुषहरूको पापरहित मन सूर्यका किरणको सङ्गलेसूर्यकान्त पत्थर झैंचम्किलो भएर रहन्छ ॥६७॥ कामना(इच्छा) नभएका जनहरूले जुन धर्म श्रद्धापूर्वक उपासना गरिन्छ र जो सधैं विष्णुलाई प्रिय लाग्ने धर्म छ त्यो भागवतधर्म भनिन्छ ॥६८॥ यस लोकमा र परलोकमा पनि फल दिने ती धेरै धर्म देखिए, तर विष्णुलाई खुशी गराउने, सबै दुःख छुटाउने धर्म

उद्धृत्य सर्वशास्त्राणि धर्मं वैशाखसम्भवम् । रमायै भगवानाह क्षीराब्धौ हितकाम्यया ॥७०॥ मार्गच्छायाविनिर्माणं प्रपादानं च वै तथा । व्यजनैर्वीजनं चैव प्रश्रयाणां समर्पणम् ॥७१॥ छत्रस्योपानहोर्दानं दानं कर्पूरगन्धयोः । वापीकूपतडागानां तटे पानविमोचनम् ॥७२॥ सायान्हे पानकस्यापि दानमिक्षुरसस्य च । ताम्बूलदानं पापघ्नं रोगघ्नन्तु विशेषतः ॥७३॥ लवणान्वित-तक्रस्य दानं श्रान्ताय वै पथि । अभ्यङ्गकरणं चैव द्विजपादावनेजनम् ॥ ७४ ॥ कट-कम्बल-पर्यङ्कदानं गोदानमेव च । मधुयुक्तं तिलानां च दानं पापविनाशनम् ॥ ७५ ॥ सायान्हे

सक्षम छन् ॥६९॥ सबै शास्त्रहरूकोसार निकालेर साराको हितहोस् भन्ने इच्छाले वैशाखमा गरिने धर्म क्षीरसमुद्रमा विष्णुले रमालाई भन्नुभयो ॥ ७० ॥ बाटामा छायाको प्रबन्ध गर्नु, पौशाला चलाउनु, पखाले हंकिदिनु, बाटामा आवश्यक पर्ने चीज दिनु ॥७१॥ छाता-जुत्ता दान गर्नु, कपूर र बास्नाआउने वस्तु दिनु, वापी-कुवापोखरीछेउमा बसेर पानी पियाउनु ॥७२॥ साँझपख पन्ना, शरबत पियाउनु,उखुको रस दिनु, पापनाशगर्ने अझ विशेष गरेर रोग नाश गर्ने गुण भएको पान खवाउनु ॥७३॥ बाटामा थाकेको बटोहीलाई मसलावाला नूनमिलाएको मोही पियाउनु, मालिश,गरिदिनु, ब्राह्मणका चरण धोइदिनु ॥७४॥ गुन्द्री-कम्लो खाट दिनु, गाईदान दिनु, पाप नाशनका लागि महमुछेको तिल दिनु ॥७५॥साँझ उखुका







चक्षुदण्डाना दानमुर्वारुकस्य च । रसायनप्रदानं च पितॄनवापणं तथा ॥ ७६ ॥ एते धर्मा विशिष्योक्ता मासेऽस्मिन्माधवप्रिये । प्रातः सूर्योदये स्नात्वा शृण्वन् द्विजकुलेरितम् ॥७७॥ नित्यकर्माणि कृत्वैव मधुसूदनमर्चयेत् । कथां माधवमासीयां शृणुयाच्च समाहितः ॥७८॥ तैलाभ्यङ्गं वर्जयेच्च कांस्यपात्रे तु भोजनम् । निषिद्धभक्षणं चैव वृथालापं च वर्जयेत् ॥७९॥ अलाम्बु गृञ्जनं चैव लशुनं तिलपिष्टकम् । आरनालाम्भस्फुटं च घृतकोशातकीं तथा ॥८०॥ उपोदकीं कलिङ्गं च शिग्रुशाकं च वर्जयेत् । निष्पापाँश्च कुलित्थानि मसूराणि च वर्जयेत् ॥८१॥

लांका र काँक्रो दिनु, पितृहरूको निर्वापणका लागि रसायन (ताकतिला पदार्थ) को दान गर्नु ॥७६॥यस भगवान्कोप्रिय वैशाख महीनामा यी धर्म विशेष गरेर गर्न भनिएका छन् । बिहान सूर्योदयमित्रैं न्वाहेर ब्राह्मणहरूले कहिएको कथासुन्नू ॥७७॥ अनि नित्यकर्महरू सकेर मधुसूदन भगवान्को पूजा गर्नु र एकाग्रचित्तले वैशाख महीनाको कथा सुन्नू ॥७८॥ वैशाखभरि तेल नघस्नू, काँसको भाँडामा नखानू,हविष्यमानिषेध गरिएका खानेकुरा खेकारकोबकवादत्यागिदिनू॥७९॥ अलाम्बु, गाजर, लसुन, तिलपिठा, काञ्जी, फुट, तोरियाँ ॥८०॥ पोईकोसाग कलिंग, सोइजन, लूँडेको सागनखानू। भुस नहटाइएका गहत र मसुरो पनिनखानू ॥८१॥भन्टा, कलिङ्ग,कोदो पनित्याग गर्नु र तन्दुलीको साग, कुसुम र मूला पनि

वृन्ताकानि कलिङ्गानि कोद्रवाणि च वर्जयेत् । तन्दुलीयकशाकं च कौसुम्भं मूलकं तथा ॥८२॥
औदुम्बरं बिल्वफलं तथा श्लेष्मातकीफलम् । सर्वथा वर्जयेद्विद्वान् मासेऽस्मिन् माधवप्रिये ॥८३॥
एतेष्वन्यतमं भुक्त्वा स चाण्डालो भवेद्ध्रुवम् । तिर्यग्योनिशतं याति नात्र कार्या विचारणा ॥८४॥
एवं मासव्रतं कुर्यात् प्रीतये मधुघातिनः । एवं व्रते समाप्ते तु प्रतिमा कारयेद्विभो ॥८५।
मधुसूदनदैवत्यां सवस्त्रां च सदक्षिणाम् । स्वर्चितां विभवैः सर्वैर्ब्राह्मणाय निवेदयेत् ॥८६॥
वैशाखसितद्वादश्यां दद्यादध्यन्नमञ्जसा । सोदकुम्भं सताम्बूलं सफलं च सदक्षिणम् ॥८७॥

वैशाखमा नखान् ॥८२॥ डुम्री बेल अनि लिसोड़ाको फल पनि यस भगवान्को प्रिय वैशाख महीनामा विद्वान् ( जान्ने ) जनले एकदम त्यागिदिन् ॥८३॥ यीमध्ये कुनै यौटा पनि चीज खाया भने त्यो अवश्य चाण्डाल हुन्छ र सय जन्मसम्म कीरा-फट्यांग्रा भइरहन्छ, यस बारेमा कुनै सोच्ने विचार्ने काम छैन॥८४॥ मधु दानवलाई मार्ने भगवानको प्रीतिका लागि यस्ता प्रकारले वैसाख महीनाको व्रत गर्न् र त्यसरी नियमपूर्वक व्रत सकिएपछि भगवान्को प्रतिमा बनाउन् ॥८५॥ अनि वस्त्र र दक्षिणाले युक्त भएको, सबै अलंकार आदिले आफैले पूजा गरिएको मधुसूदन भगवानको प्रतिमा ब्राह्मणलाईचढाउन् ॥८६॥ वैशाखशुक्ल द्वादशीमा जलले भरिएको घड़ा, लगाएको पान,पाकेका फल र प्रशस्त दक्षिणासहित गरेर दही-अन्न
... चढाउन लाउन्





दद्यादुपानहौ छत्रं ब्राह्मणान् भोजयेत्ततः । शीतलोदकदध्यन्नं सताम्बूलं सदक्षिणम् ॥८८॥
ददामि धर्मराजाय तेन प्रीणातु वै यमः । अपसव्यात्समुच्चार्य नामगोत्रे पितॄँस्ततः ॥८९॥
दद्याद्ध्यन्नमक्षय्यं पितॄणां तृप्तिहेतवे । गुरुभ्यश्च तथा दद्यात्पश्चाद्वाक्यं च विष्णवे ॥९०॥
शीतलोदकदध्यन्नं कांस्यपात्रस्थमुत्तमम् । सदक्षिणं सताम्बूलं समक्ष्यं च फलान्वितम् ॥९१॥
ददामि विष्णवे तुभ्यं विष्णुलोकजिगीषया । इति दत्त्वा यथाशक्त्या गां च दद्यात् कुटुम्बिने
॥९२॥ एवं मासव्रतं कुर्यात्सदा दम्भविवर्जितः । स सर्वैः पातकैर्हीनः कुलानुद्धृत्य वै शतम्

र उपयुक्त दक्षिणा टक्राचउन्॥८८॥ धर्मराजलाई खुशो पार्नकालागि म यी सब दान गरिरहेको छु, यस दानलयमराज खुशी होउन् भन्न् । त्यसका बाद अपसव्य भएर नाम गोत्र उच्चारण गरी पितृहरूलाई ॥८९॥ पितृहरूको तृप्तिका लगि दिइएको यो दही-अन्न अक्षय्य होस् भनी दान दिन् । त्यसै गरी गुरुहरूलाई पनि दिएर पछिबाट तलका वाक्यभन्दैविष्णु लाई पनि चढाउन् ॥९०॥ शीतल जल, दक्षिणा, पान-मसला र फलहरूले सजिएको अति उत्तम काँसको भाँडामा रहेको दही-अन्न विष्णुलोक पाउनको इच्छाले तपाई विष्णुलाई दिन्छु भनी यस्ता प्रकारले दिएर आफ्नू शक्ति अनुसार बाल-बच्चा हुने बाहुनलाई गाई पनि दान दिन् ॥९१-९२॥ सबै आडम्बर देखावापन र घमण्डले रहित भएर यस्ता प्रकारले जो वैशाख महीनाको व्रत गर्छ, त्यो सबै पातक अपराधहरूले रहित भएर आफ्ना सय कुलको उद्धार गरेर ॥९३॥

॥९३॥ पश्यतामेव भूतानां, भित्वा वै सूर्यमण्डलम् । याति विष्णोः परं धाम योगिनामपि दुर्लभम् ॥९४॥ व्याख्यात्येवं माधवीयांश्च धर्मान्विष्णोरिष्टान् व्याधपृष्ठान् समस्तान् । वृक्षः सद्यः पश्यतामेव भूमौ पपाताहो पञ्चशाखीवटोऽयम् ॥८५॥ वृक्षाच्चस्मात्कोटरे संस्थितो हि व्यालः कश्चिद्दीर्घदेही करालः । हित्वा देहं पापयोनिं च सद्यः स वै तस्थौ प्राञ्जलिनम्रमूर्धा ॥९६॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे भागवतधर्मकथनं नाम विंशोऽध्यायः ॥ २० ॥

प्राणीहरूले हेर्दाहेर्दै सूर्यमण्डललाई छिचोली योगीहरूले पनि बडो मुश्किलले पाइने विष्णुको परम धाम प्राप्त गर्दछ ॥९४॥ व्याधाले सोधिएका, विष्णुलाई खुशी पार्ने वैशाख महीनाका समस्त धर्महरूलाई शंखले यसरी वर्णन गरिरहेकै बेलामा त्यसै क्षण पाँच हाँगा भएको, सामने रहेको बरको रूख भूईमा धडयाम्म ढल्यो ॥९५॥ टोडकामा कहिलेदेखि बसेको कुनै एकदम लामो डरलाग्दो सर्प त्यस रूखबाट निस्केर, पाप योनिमा जन्मेको शरीरलाई तुरुन्तै त्यागेर, त्यो नम्र भै हात जोडेर ऋषिका सामु रहँदो भयो ॥९६॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यको नारद र अम्बरीषको संवादमा भागवत धर्म कथन नामको बीसौं अध्याय सकियो ॥२०॥

*

---





## अथैकविंशोऽध्यायः

श्रुतदेव उवाच । ततस्तु विस्मितो भूत्वा शङ्खो व्याधसमन्वितः । को भवानिति तं प्राह दशैषा च कुतस्तव ॥१॥ केन वा कर्मणा चासादुर्योनिरशुभावहा । अकस्मात्ते कथं मुक्तिरेतदाचक्ष्व विस्तरात् ॥२॥ शङ्खेनैवं तदा पृष्टो दण्डवत्पतितो भुवि । प्रश्रयावनतो भूत्वा प्राञ्जलिर्वाक्यमब्रवीत् ॥३॥ अहं पुरा द्विजः कश्चित्प्रयागे बहुभाषणः । रूपयौवनसम्पन्नो विद्यामदसुगर्वितः ॥४॥ धनाढ्यो बहुपुत्राढ्यः सदाहङ्कारदूषितः । कुसीदस्य मुनेः पुत्रो नाम्ना रोचन इत्यहम् ॥५॥ आसनं शयनं निद्रा व्यवायोऽक्षपरिक्रियाः । लोकवार्ता कुसीदं वा

श्रुतदेवले भने—त्यसका बाद व्याधका साथै रहेका शंखले चकित भएर 'तिमी को हौ ? कसरी तिम्रो यो दशा भयो?' भनी उसलाई सोधे ॥१॥ यो कल्याणकारी खराब योनिमा जन्म कुन कर्मले पायौ ? फेरि अकस्मात् कसरी तिम्री मुक्ति भयो ? यो सब कुरो विस्तारपूर्वक भन॥२॥ तब शंखले यस्ताकिसिमले सोधिएको उसले भूईमा लोरो झैं पसारिएर अर्थात् दण्डवत् गरेर विनयले अति नम्र भएर यो कुरो भन्न थाल्यो–॥३॥ पूर्वजन्ममा म प्रयागमा रूप र यौवनलेबलेको विद्या र घमण्डले फुलेको ज्यादा बोल्ने कुनै ब्राह्मण थिए ॥४॥ त्यस बेला म धनले संपन्न, धेरै छोरा-छोरी भएको, सधैं घमण्डले चुर रहने, रोचन नामको कुसीद मुनिको छोरो थिएँ ॥५॥ त्यस बेला बस्नु, निदाउनु, खराब काम गर्नु,

व्यापारास्तु ममाऽभवन् ॥६॥ तानि मात्राणि कर्माणि लोकनिन्दाविशङ्कितः । सदम्भश्च सदा कुर्वे न श्रद्धा मे कदाचन ॥७। दुर्बुद्धेर्मम दुष्टस्य कियान्कालो गतोऽभवत् । तदा वैशाख-मासेऽस्मिञ्जयन्तो नाम वै द्विजः ॥८॥ श्रावयामास तान्मापधर्मान् भागवतप्रियान् । तत्क्षेत्रवासिनां पुण्यकर्मणां च द्विजन्मनाम् ॥९॥ नारीनराः क्षत्रियाश्च वैश्याः शूद्राः सहस्रशः । प्रातः स्नात्वा समभ्यर्च्य मधुसूदनमव्ययम् ॥१०॥ कथां शृण्वन्ति सततं जयन्तेन समीरिताम् । शुचिभूता मौनधरा वासुदेवकथारताः ॥११॥ वैशाखधर्मनिरता दम्भालस्यविवर्जिताः । तां सभां

जुवा खेल्नु, गफ गर्नु, ब्याजमा रुपियाँ लगानी लाउनु नै मेराबेपार वा कामथिए ॥६॥ लोकनिन्दाको कुरेख्वालनराख्ने भएको म सधैं घमण्डले चूर भएर तिनै कर्म मात्रै गर्थें कहिल्यै पनि मलाई असल काममा श्रद्धा लाग्दैनथियो ॥७॥ खराब बुद्धि भएको दुष्ट मेरो यसै किसिमले कैयन काल बित्यो । तब यस्तै वैशाख महीनामा जयन्त नामका कुनै ब्राह्मणले ॥८॥ भगवान्का प्रिय ती वैशाखमा धर्महरू सुनाउँदथे । त्यस ठाउँमा रहने, पुण्यकर्म गर्ने ब्राह्मणहरूका नर नारीहरू हजारौं क्षत्रिय वैश्य र शूद्रहरू प्रातः स्नान गरेरअविनाशी मधुसूदन भगवान्को पूजा गरेर॥९-१०॥ शुद्ध पवित्र भएर, चुपचाप रहेर, आडम्बर र आलस्य त्यागेर, वैशाखका धर्ममा लागेर, वासुदेवको कथा सुन्नमा तनमन दिएर जयन्तले खूब राम्रोसँग भनिएको कथा हमेशा सुन्दथे । त्यहाँको वर्णन सुनेर हेर्ने सकसकले म पनि त्यस सभामा





च प्रविष्टोऽहं कौतुकाच्च दिदृक्षया ॥१२॥ सोष्णीषेण मया मूर्ध्ना नमस्कारोऽपि नो कृतः । ताम्बूलं चन्दनं देहे कचुकं च मया धृतम् ॥१३॥ कथां विक्षेपयाञ्चक्रे लोकवार्ताभिरञ्जसा । सर्वेषां चित्तचाञ्चल्यमभूद्वै लोकवार्तया ॥१४॥ क्वचिद्धासः प्रमार्याहं क्वचिन्निन्दन्क्वचिद्धसन् । एवं कालो मया नीतः कथा यावत्समाप्यते ॥१५॥ पश्चात्तेनैव दोषेण सद्योऽल्पायुर्विनष्टधीः । सन्निपातेन पञ्चत्वं प्राप्तोऽहं च परे दिने ॥१६॥ तप्तसीसजलैः पूर्ण निरयं च हलाहलम् । प्राप्य भुक्त्वा यातनां च मन्वन्तानि चतुर्दश ॥१७॥ मुक्तोऽप्यथ च लक्षेषु तथा चतुरशीतिभिः ।

रसें ॥११-१२॥ पगरी बाँधेको मैले त्यहां पसेर शिरले नमस्कार पनि गरिनँ । म पान चपाइरहेको थिएँ चन्दन सिङ्गारिएको थिएँ र शरीरमा मैले पोशाक पनि डटेको थिएँ ॥१३॥ त्यस सभामा पस्नेबित्तिकै मजाकियाकुराहरूले कथा-लाई खल्बलाइदिएँ । मजाकिया कुराले सबै श्रोताहरूको चित्त चञ्चल भयो ॥१४॥ म कहिले लुगा फैलाउँथें, कहिले निन्दा गर्थें र कहिले हाँस्ने गर्थें । कथा नसकिएुञ्जेल मैले यसै गरी समय बिताएँ ॥१५॥ पछि त्यसै पापका दोषले तुरुन्तै बुद्धि नाशिएर अल्पायु भएको म अर्को दिन सन्निपातले मरें ॥१६॥ मरेपछि सीसा पग्लेको जलले भरिएकोहलाहल नरकमा पुगेर त्यहाँ चौध मनुको अन्त नभएसम्म नारकीय यातना भोगेर ॥१७॥छुटेपछि पनि चौरा[illegible] योनिहरूमा

क्रमाद्योनिषु जातोऽहमिदानीं त्र वटद्रुमे ॥१८॥ दशयोजनविस्तीर्णे शतयोजनमुन्नते । व्यालोऽति-
तामसः क्रूरः सप्तयोजनकोटरे ॥१९॥ भूत्वा वसामि विप्रर्षे कर्मणा बाधितः पुरा । अयुतं च
समायाता निराहारस्य कोटरे ॥२०॥ दैवात्तव मुखाम्भोजसमीरितकथामृतम् । श्रुत्वा च
चक्षुश्चुलुकैः सद्यो ध्वस्ताशुभो मुने ॥२१॥ व्यालयोनिं विसृज्योऽहं दिव्यरूपधरः पुमान् ।
प्राञ्जलिः प्रणतो भूत्वा पादोस्ते शरणं गतः ॥२२॥ कस्मिञ्जन्मनि त्वं बन्धुर्न जाने मुनिसत्तम ।
न मयोपकृतं क्वापि सानुबन्धः कृतः सताम् ॥२३॥ साधूनां समचित्तानां सदा भूतदयावताम् ।

क्रमैले जन्मँदै आएको म त्यतिखेर दश योजन फैलिएको, सय योजन अग्लो सय वरको रूखमा सात योजनको टोड्कामा अत्यन्त तामसी क्रूर सर्प भै ॥१८-१९॥ हे ब्रह्मर्षि ! पहिलेका पाप कर्मले बाँधिएर बसेको छू । यस टोड्कामा भोकभोकै टङ्गिएर बसेका मेरो दश हजार वर्ष बिते ॥२०॥ दैवसंयोगले तपाईंका मुखकमलबाट कहिएको अमृतरूप कथा आँखाद्वारा सुनेर (सर्पको देख्ने र सुन्ने शक्ति आँखैमा रहन्छ) तुरुन्तै पाप नाशिएको ॥ २१ ॥ म हे मुनि ! सर्पयोनिलाई त्यागेर दिव्य रूपधारी पुरुष भएको छँदो हात जोडी नम्र भएर तपाईंका दुवै पाउको शरणमा रहेको छु॥२२॥ हे मुनिश्रेष्ठ ! कुन जन्ममा तपाईं मेरो बन्धु हुनुहुन्थ्यो, त्यो म जान्न सक्दिनँ, न मैले कहीं उपकार नै गरेको छु, फेरि कसरी सज्जनको कृपापात्र भएँ॥२३॥ सबै प्राणी मात्रमा दया गर्ने समान चित्त भएका साधुहरूको स्वभाव नै परोपकार गर्ने हुन्छ, तिनी





परोपकारप्रकृतिर्न चैषामन्यथा मतिः ॥२४॥ मामद्यानुगृहाण त्वं यथा धर्मे मतिर्भवेत् । यथा च
सुगतिर्भूयाद्यथा विष्णौ रतिर्भवेत् ॥२५॥ न भूयाद्विस्मृतिः क्वापि विष्णोर्देवस्य चक्रिणः ।
महतां साधुवृत्तानां सङ्गतिश्च सदा भवेत् ॥२६॥ नामर्षः क्वापि मे भूयान्नाहङ्कारो मदोऽपि वा ।
दारिद्र्यमेव ये भूयान्मदान्धानां यदञ्जनम् ॥२७॥ इति तं बहुधा स्तुत्वा प्रणम्य च पुनः पुनः ।
प्रांजलिः प्रणतस्तस्थौ तूष्णीमेव तदग्रतः॥२८॥ ततो दोर्भ्यां समुत्थाप्य शङ्खःप्रेमपरिप्लुतः । पस्पर्श
पाणिना चाङ्गं जातो येन हतांहसः॥२९॥ चक्रेमोऽनुग्रहं तस्मिन् दिव्यरूपधरे द्विजे । प्राह तं कृपया

साधुहरूको बुद्धि विपरीत कहिल्यै हुँदैन ॥२४॥ तपाईं मलाई यस्तो कृपा गर्नुहोस् कि जे गर्दा धर्ममा बुद्धिहोस्, जे गर्दा असल गतिहोस्,जे गर्दा विष्णु भगवान्मा प्रेमहोस्॥२५॥सुदर्शन चक्रधारी भगवान् विष्णुको विस्मृत कहिल्यै नहोस्। साधु वृत्तिवाला दूठाहरूको संगति भैरहोस्॥२६॥मलाई कहिल्यै पनि ईर्ष्या गर्ने बुद्धि नआओस् र अहंकार र घमण्ड गर्ने बुद्धि पनि मेरो कहिल्यै नहोस् . घमण्डले अन्धा हुनेहरूको लागि आँजन जस्तो दारिद्र्य नै सधैं मलाई भइरहोस्॥२७॥ यस्ता प्रकारले उनलाई अनेक प्रकारसंग स्तुति गरेर बारम्बार प्रणाम गरेर बड़ो नम्रतासंग हात जोड़ी ती मुनिको अगाडि रह्यो ॥२८॥ तब प्रेमले विह्वल भएका शंखले दुवै बाहुले उसलाई उठाएर, आफ्ना हातले उसको शरीर सुम्सुम्याए,जुन स्पर्शले उ सारा पाप नाशिएको भयो॥२९॥ तब त्यो दिव्य रूप धारण गरेको ब्राह्मणमा ती मुनिले कृपा गरे र अत्यन्त दयालु

विष्टो भाविवृत्तान्तमंजस ॥३०॥ द्विज त्वं मासमाहात्म्यश्रवणाच्च हरेरपि । माहत्म्यश्रवणात्सद्यो ध्वस्तनष्टाखिलाशुभः ॥३१॥ अतिवाहिकलोकांश्च क्रमाद् गत्वा पुनर्भुवि । दशार्णविषये पुण्ये भविता त्वं द्विजोत्तमः ॥३२॥ वेदशर्मेति विख्यातः सर्वविद्याविशारदः तत्र ते भविता जातिस्मृतिरात्यन्तिकी शुभा ॥३३॥ तथा स्मृतानुबन्धस्त्वं त्यक्तसर्वैषणः शुभः । करोषि सकलान् धर्मान् वैशाखोक्तान् हरिप्रियान् ॥३४॥ निर्द्वन्द्वो निःस्पृहोऽसङ्गो गुरुभक्तो जितेन्द्रियः । सदा विष्णुकथालापो भविता तत्र जन्मनि ॥३५॥ तेन सिद्धिमवाप्याऽथ विध्वस्ताखिलबन्धनः ।

भएका छँदा त्यसै वेला उसलाई उसको भावी (पछि हुने) वृत्तान्त भने ॥ ३० ॥ हे ब्राह्मण ! वैशाख महीनाको महात्म्य सुन्नाले र हरिको महिमा सुन्नाले पनि अहिल्यै समस्त पाप नाशिएका भयो अर्थात् सब पापबाट मुक्त भयौ ॥ ३१ ॥ अब तिमी अतिवाहिक लोकहरूमा क्रमैले गएर फेरि पृथ्वीमा पुण्यपुरी दशार्ण देशमा उत्तम ब्राह्मण भएर जन्मनेछौ॥३२॥त्यस जन्ममा तिमी सबै विद्यामा विद्वान् वेदशर्मा भन्ने नामले प्रसिद्ध हुनेछौ, त्यस जन्ममा पनि तिमी पहिलेको कल्याणकारी जातिस्मृति हुनेछ॥३३॥त्यसरी पूर्वस्मृति भएका तिमीले भौतिक सुखदाई सबै इच्छाहरूलाई छाडेर हरिका प्रिय वैशाखमा गर्नुपर्ने सकल धर्म गर्नेछौ[॥३४॥ त्यस जन्ममा तिमी निर्द्वन्द्व सुख-दुःखको ख्याल नराख्ने, आत्माराम, संग्रह त्यागी गुरुभक्त, जितेन्द्रिय भएर सधैं विष्णु भगवान्‌को कथा वार्तामा तल्लीन हुनेछौ॥३५॥अनि त्यस पुण्यले सकल सांसारिक





प्राप्नोषि परमं धाम योगैरपि दुरासदम् ॥३६॥ मा भैषीः पुत्र भद्रं ते भविता मत्प्रसादतः । हास्याद्भयात्तथा क्रोधाद्द्वेषात्कामदथापि वा ॥ ३७ ॥ स्नेहाद्वा सकृदुच्चार्य विष्णोर्नामाघहारि च । पापिष्ठा अपि गच्छन्ति विष्णोर्धाम निरामयम् ॥ ३८ ॥ किमुत श्रद्धया युक्ता जितक्रोधा जितेन्द्रियाः । दयावन्तः कथां श्रुत्वा गच्छन्तीति द्विजोत्तम ॥ ३९ ॥ केचित्केवलया भक्त्या कथालापैकतत्पराः । सर्वधर्मोज्झिता वाऽपि यान्ति विष्णोः परं पदम् ॥४०॥ द्वेषादिपूर्णभक्त्या वा केचिद्विष्णुमुपासते । तेऽपि यान्ति परं धाम पूतनेवासुहारिणी ॥४१॥ महद्भिः सङ्गतो नित्यं

बन्धन सखाप भएका तिमी सिद्धि प्राप्त गरेर योगीहरूले पनि बड़ा मुश्किलले पाइने भगवान्‌को परमधाम पाउनेछौ॥३६॥ हे बाबू ! नडराऊ । मेरा कृपाले तिम्रो कल्याण हुनेछ । हँसीले, डरले, क्रोधले, द्वेषले अथवा इच्छैले॥३७॥ स्नेहैले पनि पाप नाश गर्ने हरिको नाम एकैपल्ट उच्चारण गर्दा पापीहरू पनि भयरहित विष्णुको धाममा जान्छन् भने॥३८॥ हे द्विजश्रेष्ठ ! श्रद्धाले युक्त भएका क्रोध जितेका, इन्द्रिय जितेका दयालुहरू भगवान्‌को कथा सुनेर भगवान्‌को परमधाम जान्छन् भन्नमा के आश्चर्य छ ॥३९॥ यदि कोही केवल भक्तिले मात्रै पनि भगवान्‌को कथा सुन्नमा तल्लीन रहेको छ भने त्यस्ताले अरू कुनै धर्म नगरेका भए पनि विष्णुको परमपद पाउँछन् ॥ ४० ॥ यदि कसैले द्वेषले, रिसले भरिएको भक्तिले अर्थात् 'पखेस् तलाई' भन्ने भावनाले नै भए पनि विष्णुको उपासना गर्छन् यानी समीप रहन्छन् भने ती पनि–प्राण हर्ने तसिएकी पूतनाले झैं—भगवान्‌को परम धाम पाउँछन् ॥ ४१ ॥ महात्माहरूको संगत गर्नु, सधैं भगवान्‌को भजन गर्नु र

वाग्विसर्गस्तदाश्रयः । मुमुक्षुणां च कर्तव्यः स विधिः श्रुतिचोदितः ॥ ४२ ॥ स वाग्विसर्गो जनताघविप्लवो यस्मिन्प्रतिश्लोकमबद्धवत्यपि । नामान्यनन्तस्य यशोऽङ्कितानि यत् शृण्वन्ति गायन्ति गृह्णन्ति साधवः ॥४३॥ यः कष्टसेवां न च कांक्षते विभुर्न वा धनं भूरि न रूपयौवने । स्मृतः सकृद्यच्छति धाम भास्वरं तं वा दयालुं शरणं व्रजेम ॥४४॥ तमेव शरणं याहि नारायणमनामयम् । भक्तवत्सलमव्यक्तं चेतोगम्यं दयानिधिम् ॥४५॥ कुरु सर्वानिमान् धर्मान् वैशाखोक्तान्महामते । तेन तुष्टो जगन्नाथः शर्म ते च विधास्यति ॥४६॥ इत्युक्त्वा विररामाथ

भगवान्‌के शरणमा रहनु मुक्ति चाहनेहरूको कर्तव्य हो, सो सब विधि वेदले कहिले कहिएको हो॥४२॥त्यो नै मनुष्यहरूको पाप नाश गर्ने वाग्विसर्ग कहिन्छ,जसमा प्रतिश्लोकमा अबाधरूपले अर्थात् अविच्छिन्न प्रकारले अनन्त भगवान्‌को नाम र कीर्ति वर्णन गरिएको हुन्छ र जसलाई साधु सज्जनहरू सुन्दछन्, गाउन् र मनन गरिरहन्॥४३॥जुन भगवान् कष्टले गरिने सेवा चाहनुहुन्न; न धेरै धन, न त रूप यौवन नै चाहनुहुन्छ । जसलाई एकचोट पनि संझियो भने मनुष्य दिव्य धाममा जान्छ, तिनै दयालुका शरणमा हामी जाऔं ॥४४॥ भक्तलाई प्यारो गर्ने भौतिक रूपमा नदेखिने,ध्यानले मात्र जानिने दयाका खानि तिनै अविनाशी नारायणको शरणमा पर॥४५॥हे महामति! वैशाख महीनामा भनं कहिएका यिनै सब धर्म हरू गर । यिनै धर्मले खुशी हुनुभएका जगन्नाथ तिम्रो कल्याण गर्नेछन् ॥४६॥ यति भनेर ती चुप लागेपछि व्याधालाई





व्याधं दृष्ट्वा सुविस्मितः । स दिव्यः पुरुषः प्राह पुनस्तं मुनिपुङ्गवम् ॥४७॥ दिव्यपुरुष उवाच - धन्योऽस्म्यनुगृहीतोऽस्मि त्वया शङ्ख दयालुना । दिष्ट्या गता मे दुर्योनिर्यामि चैव परां गतिम् ॥४८॥ इति तं च परिक्रम्य ह्यनुज्ञातो दिवं ययौ । ततः सायमभूद्राजञ्छङ्खो व्याधेन तोषितः ॥४९॥ सन्ध्यां सायन्तनीं कृत्वा रात्रिशेषं निनाय च । नानाख्यानैश्च भूपानां देवानां च महात्मनाम् ॥५०॥ लीलाभिरवताराणां दृष्टगोष्ठीभिरेव च । ब्राह्मे मुहूर्ते चोत्थाय पादौ प्रक्षाल्य वाग्यतः ॥५१॥ ध्यायश्च तारकं ब्रह्म कृत्वा शौचादिसत्क्रियाम् । वैशाखे मेषगे सूर्ये स्नात्वा

देखेर चकित भएको त्यस दिव्य पुरुषले ती मुनिलाई फेरि भने ॥४७॥ दिव्य पुरुले भने—हे शंख मुनि ! म धन्य छु, दयालु तपाईंले अनुगृहीत ( कृपा गरिएको ) छु; भाग्यले मेरो यो खराब योनिको जन्म छुट्यो, अब म श्रेष्ठ गतिमा जान्छु॥४८॥भनी मुनिलाई परिक्रमा गरेर, मुनिले 'लौ जाऔ' भन्ने आज्ञा पाइएको उ स्वर्ग गया । तब हे राजन् ! यत्तिकैमा साँझ पऱ्यो,अनि व्याधाले आफ्ना सेवा सुश्रुषाले खुशी पारिएका शंखले ॥४९॥ सायंकालको संध्या-जप गरेर राजाहरूको, देवताहरू; महात्माहरूको अनेक किसिमका वर्णनले, अनि भगवान्का अवतारहरूको लीलाका वर्णनहरूले र आफैले देखेका भगवान्का भक्तहरूको जमघटको वर्णनले बाँकी रात बिताएर, सबेरै ब्राह्म मुहूर्तमा उठेर, गोडा धोएर मौन धारण गरी ॥५०-५१॥ तारक ब्रह्मको ध्यान लरे अनि शौचादि सत्क्रिया पनि गरेर, सूर्य मेष राशिमा भएको वैशाख

प्राक् च भगोदयात् ॥५२॥ कृत्वा सन्ध्यादिकं कर्म तथा सन्तर्प्य चाखिलान् । व्याधमाहूय हृष्टात्मा मूर्ध्नि प्रोक्ष्य निरीक्ष्य च ॥ ५३ ॥ रामेति द्व्यक्षरं नाम ददौ वेदाधिकं शुभम् । विष्णोरेकैकनामानि सर्ववेदाधिकं मतम् ॥५४॥ तेभ्यश्चानन्तनामभ्योऽधिकं नाम्नां सहस्रकम् । तादृङ्नामसहस्रेण रामनामसमं मतम् ॥ ५५ ॥ तस्माद्रामेति तन्नाम जप व्याध निरन्तरम् । धर्मनितान्कुरु व्याध यावदामरणान्तिकम् ॥५६॥ ततस्ते भविता जन्म वल्मीकस्य ऋषेः कुले । वाल्मीकिरिति नाम्ना वै भूमौ ख्यातिमवाप्स्यसि ॥५७॥ इति व्याधं समादिश्य प्रतस्थे दक्षिणां

महीनामा सूर्योदयभन्दा पहिल्यै न्वाहेर॥५२॥सन्ध्या आदि कर्म गरेर,समस्त पितृहरूलाई तर्पण दिएर, प्रसन्नचित्त भएका उनले व्याधालाई बोलाएर उसको शिरमा जल सेचेर, उसलाई हेरेर ॥५३॥ वेदभन्दा पनि अधिक कल्याणकारी 'राम' भन्ने यो दुइ अक्षरको नाम उसलाई जप्न दिए। विष्णुका एक-एक नाम सबै वेदभन्दा पनि ज्यादा उत्तम मानिन्छन्॥५४ ती अनन्त नामहरूभन्दा पनि विष्णुको सहस्र नाम अधिक श्रेष्ठ छ। त्यस्ता हजार नामले तुल्य यौटै 'राम' भन्ने नाम कहिएको छ ॥५५॥ हे व्याधा ! त्यसकारण 'राम' भन्ने त्यो दुइ अक्षरको नाम नै निरन्तर जप। हे व्याधा ! यी धर्म-हरूलाई नमरुन्जेल गरिरहू॥५६॥त्यो गर्‍यौ भने वल्मीक ऋषिको कुलमा तिम्रो जन्म हुनेछ र 'वाल्मीकि' भन्ने यो नामले पृथिवीमा प्रसिद्धि पाउनेछौ॥५७॥ व्याधालाई यस्तो उपदेश दिएर मुनि दक्षिण दिशातिर जान प्रस्थान गरे। व्याधाले





दिशम् । व्याधोऽपि तं परिक्रम्य प्रणम्य च पुनः पुनः ॥५८॥ किञ्चिद्दुरानुगो भूत्वा स रुदन्विरहातुरः । यावद्दृष्टिपथं तावत् पश्यंस्तस्य गतिं पुनः ॥५९॥ पुनर्निवृत्तस्तच्चित्तस्तमेव हृदि चिन्तयन् । स्थलं निर्माय तन्मार्गे प्रपां कृत्वा सुनिर्मलाम् ॥६०॥ अतियोग्यानिमान्धर्मान्वैशाखोक्तांश्चकार ह । वन्यैः कपित्थपनसैर्जम्बुचूतादिभिः फलैः ॥६१॥ मार्गगानां श्रमार्तानामाहारं पर्यकल्पयत् । उपानद्भिश्चन्दनैश्च तत्रैश्च व्यजनैरपि ॥ ६२ ॥ वालुकास्तरणोपेतच्छायाभिश्च क्वचित् क्वचित् । आजहार च पान्थानां श्रमं स्वेदोद्भवं तथा ॥६३॥ प्रातः स्नात्वा दिवारात्रं

पनि ती मुनिलाई परिक्रमा गरेर,बार-बार ढोगेर॥५८॥ केही परसम्म पछि लाग्यो र विरहले व्याकुल भएर रुन लाग्यो र देखियुन्जेलसम्म ती मुनि गएको हेरिरह्यो॥५९॥ अनि फर्किएर उनैमा चित्त दिएर हृदयमा उनैलाई सम्झिंदै त्यस वनमा बस्ने थलो बनाएर,त्यस थलोको बाटोमा अति निर्मल जल भएको पौशाला राखेर॥६०॥ वैशाखमा गर्न बताइएका अति योग्य ई धर्महरूलाई गर्दो भयो। कैथ, कटहर, जामुनु, आँप आदि जंगली फलहरूको ॥ ६१ ॥ थकाइले पीडित भएका बटुवालाई भोजन गरायो र उसले कति बटुवालाई जुत्ता पहिराइदिएर, कतिलाई चन्दन लाईदिएर, कतिलाई छाता ओढाइदिएर कतिलाई पंखा हँकिदिएर ॥६२॥ कहीं-कहीं बालुवा बिछाएको छायायुक्त ठाउँ बनाइदिएर, कतिलाई पसीना पुछिदिएर बटुवाहरूको थकाइ मेटिदियो॥६३॥ र रोजै प्रातःस्नान गरेर 'राम' यी दुइ अक्षरको नाउँ जप्तै त्यो व्याधा-

जपन्नामेति द्व्यक्षरम् । व्याधजन्म निनायासौ वल्मीकस्य सुतोऽभवत् ॥६४॥ कृणुर्नाम मुनिः कश्चित्तस्मिन्नेव सरोवरे । ततो वै दुश्चरं तेपे अन्नाहारविवर्जितः ॥६५॥ वल्मीकमभवद्देहे तस्य कालेन भूयसा । वल्मीक इति तं प्राहुस्ततो वै मुनिपुङ्गवम् ॥६६॥ पश्चात्तपोविरामान्ते कृणौ स्मृतिपथं गते । वयो विरूढस्ततो राजन् स्खलितं चेन्द्रियं मुनेः ॥६७॥ जग्राह चोरगी काचित् तस्यां जज्ञे वनेचरः । वाल्मीकिरिति विख्यातो भुवनेषु महायशाः ॥६८॥ यो वै रामकथां दिव्यां स्वैः प्रबन्धैर्मनोहरैः । लोके प्रख्यापयामास कर्मबन्धनिकृन्तनीम् ॥६९॥ श्रुतदेव उवाच । यस्त्व

जन्म बिताएर पछि उ वल्मीक ऋषिको छोरो भयो ॥६४॥ त्यसै तलाउको किनारमा नै कोही 'कृणु' नामका मुनि त्यस बेला खान-पिन छोडेर कठोर तपस्या गरेर रहेका थिए ॥६५॥ धेरै कालदेखि समाधिमा रहेकाले उनको शरीरमा धमिराले गोलो उठाएको थियो । यसै कारणले तो मुनिश्रेष्ठलाई 'वल्मीक' भन्दथे ॥६६॥ पछि तपस्याबाट विराम लिएपछि, 'कृणु' भन्ने नाम पनि कसै-कसैले मात्रै संझने भैसकेपछि अर्थात् 'कृणु' भन्ने नाम हराइसके-पछि हे राजन् ! मुनिका उमेर र इन्द्रियहरू पनि विस्तार-विस्तार शिथिल भैसकेपछि अर्थात् बुढेसकालमा ॥६७॥ 'उरगी' नामकी कुनै जंगली युवति उनीसित फसी र त्यसमा ती मुनिले पौटा भिल्ल जातिको छोरो जन्माए, जुन भिल्ल पछिगएर विश्वभरमा ठूलो यशस्वी 'वाल्मीकि' भन्ने नामले विख्यात भयो॥६८॥ जुन वाल्मीकिले आफ्ना मनोहर प्रबन्धहरूद्वारा



वैशाखमाहात्म्यं भूप लघ्वपि भूरिदम् । व्याधोऽप्युपानहौ दत्वा ऋषित्वं प्राप दुर्लभम् ॥७०॥ य इदं परमाख्यानं पापघ्नं रोमहर्षणम् । शृणुयाच्छ्रावयेद्वापि न भूयः जन्मगो भवेत् ॥७१॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे व्याधोपाख्याने वाल्मीकेर्जन्मकथनं नामैकविंशोऽध्यायः ॥२१॥

दिव्य 'राम-कथा' लेखे र कर्मको बन्धनलाई काट्ने त्यो कथा संसारमा प्रख्यात गराए ॥६९॥ श्रुतदेवले भने-हेराजन् ! सानु भएर पनि धेरै फल दिने वैशाखको माहात्म्य हेर ! जुत्ता दान दिएर जसको प्रभावले व्याधाले पनि बड़ा मुश्किलले पाइने 'ऋषि-पद' पायो ॥७०॥ जो मनुष्य रोमाञ्चकारी, पाप सखाप पार्ने यो अपूर्व इतिहास सुन्छ अथवा सुनाउँछ फेरि उसले संसारमा जन्मनुपर्दैन ॥७१॥

श्री स्कन्दपुराण वैशाख माहात्म्यको नारद र अम्बरीष संवादमा व्याधाको उपाख्यानमा, वाल्मीकिको जन्म कथन नामको एक्काइसौं अध्याय सकियो ॥ २१ ॥

## अथ द्वाविंशोऽध्यायः

मैथिल उवाच—का ह्यस्मिँस्तिथयः पुण्या मासे वैशाखसंज्ञके । कानि दानानि शस्तानि तासु तासु विशेषतः ॥१॥ कैः प्रख्याताश्च वै लोके एतदाचक्ष्व विस्तरात् । श्रुतदेव उवाच—त्रिराद्य तिथतः पुण्या वैशाखे मेषगे रवौ ॥२॥ एकैकस्यां कृतं पुण्यं कोटिकोटियुगं भवेत् । सर्वदानेषु यत्पुण्यं सर्वतीर्थेषु यत्फलम् ॥३॥ तत्फलं समवाप्नोति ह्येकैकस्यां जलाप्लुतः । स्नानं दानं तपोहोमो देवतार्चनसत्क्रियाः ॥४॥ कथायाः श्रवणं चैव सद्योः मुक्ति विधायकम् । रोगाद्युपहतो यस्तु दारिद्र्येणापि पीडितः ॥५॥ श्रुत्वा कथामिमां पुण्यां कृतकृत्यो भवेन्नरः । अस्नात्वा

मैथिल राजाले भन्नुभयो—यस वैशाख नामको महीनामा कुन-कुन तिथि पवित्र छन् ? ती-ती तिथिमा विशेष गरेर कुन-कुन दान विशिष्ट छन् ? ॥१॥ संसारमा कस-कसद्वारा ती तिथि प्रख्यात भए ? हे ब्रह्मन् ! विस्तारपूर्वक योकहि बक्सियोस् । श्रुतदेवले भन्नुभयो—मेषमा सूर्य भएको वैशाख महीनामा शुक्ल पक्ष र कृष्ण पक्षका गरी तीसै तिथिहरू पवित्र छन् ॥२॥ एक-एकमा अर्थात् प्रत्येक तिथिमा गरिएको पुण्य कोटि-कोटि बढ्‌ता गुण दिने हुन्छ। सारा चीज दान गर्दा जो पुण्य हुन्छ, सारा तीर्थमा जाँदा जो फल मिल्छ ॥३॥ त्यो फल वैशाखका एक-एक तिथिमा पानीमा डुबुल्की मार्नाले मिल्दछ । वैशाखमा गरिका स्नान, दान, तपस्या, होम, दौताको पूजा,पौशाला राख्नु आदि असल काम॥४॥ वैशाख माहात्म्यको सुनाइ यी सबै काम तुरुन्तै मुक्ति दिनेवाला हुन्छन ; जो रोगले दुःखी छ या जो दारिद्र्यले पीडित छ

चाप्यदत्वा च येन नीता इमाः शुभाः ॥६॥ स गोघ्नश्च कृतघ्नश्च पितृघ्नश्चात्महा स्मृतः । जलाशयाश्च स्वाधीनाः स्वाधीनं च कलेवरम् ॥७॥ माधवो मनमा सेव्यः सकलैश्च गुणैस्तथा । साधवश्च दयावन्तः को न सेवेत माधवम् ॥८॥ दरिद्रैश्च धनाढ्यैश्च पङ्गुभिश्चान्धकैस्तथा । षण्ढैश्च विधवाभिश्च नारीभिश्च नरैस्तथा ॥९॥ कुमारयुववृद्धैश्च रोगार्तैरपि भूमिप । अतीव सुखमाध्यो हि धर्मो वैशाखगोचरः ॥१०॥ मासमेनमनुप्राप्य धर्मान् कुरु शुभानिमान् । यो हि यत्नं न कुरुते तस्मात्कोऽन्यपरः पशुः ॥११॥ योऽतीवसुलभान् धर्मान्न करोति नराधमः । तस्यैव

॥५॥ त्यो जन वैशाख महीनाको यो पुण्यदायीकथा सुनेर कृतार्थ हुन्छ । न्वाहेर अथवा क्यै दान नगरीकन जसले यी शुभ तिथिहरू बिताउँछ ॥६॥ त्यस्ता अधर्मीलाई गाई मार्ने, कृतघ्नी, पितृ-हत्या गर्ने र आत्महत्या गर्ने भनिन्छ जलाशयहरू पनि स्वतन्त्र छन्, आफ्नू शरीर पनि स्वतन्त्र छ ॥७॥त्यसकारण वैशाख महीना तन-मन-धनले र वैशाखमा गर्नबताइएका सकल कर्महरूले सेवा गरिनुपर्छ । साधुहरू, दयालुहरू र अरू पनि को वैशाखलाई सेवाइन ।८। दरिद्रीहरू, धनाढ्यहरूले, लँगडाहरूले, अन्धाहरूले, नपुंसकहरू, विधवाहरूले, नारीहरूले नरहरूले ॥९॥ कुमार, युवा, वृद्धहरूले, रोगीहरूले पनि हे राजन् ! वैशाखमा गर्न बताइएको धर्म सुखपूर्वक गर्न सकिने छ ॥१०॥ यो महीना आउनासाथ यो कल्याणकारी धर्महरू गर्नुहोस् । जो यत्नपूर्वक यस्तो सजिलो धर्म गर्दैन त्योभन्दा अर्को पशु को होला॥११॥ जो अधम मनुष्य यी अतिसजिला

शाश्वता लोका नरका नात्र संशयः ॥१२॥ अथातः सम्प्रवक्ष्यामि तस्मिन्मासे नृपोत्तम । तां तिथिं सर्वपापघ्नीं दध्नः सारमिवाद्धृताम् ॥१३॥ चैत्रे मासि महापुण्ये मेषसंस्थे दिवाकरे । पापघ्नो पितृदैवत्या यज्ञकोटिफलप्रदा ॥१४॥ अत्रैव श्रूयते पुण्या पितृगाथां पुरातनी । नरके पितॄनुद्दिश्य सावर्णौ शासिति क्षितिम् ॥१५॥ त्रिंशत्कलियुगस्यान्ते सर्वधर्मविवर्जिते । आनर्ते तु द्विजः कश्चिद्धर्मवर्ण इति श्रुतः ॥१६॥ दृष्ट्वा कलियुगे घोरे जनान्पापरतान्मुनिः । तस्यैव प्रथमे पादे वर्णधर्मविवर्जिते ॥१७॥ स कदाचित्सत्रयागं मुनीनां तु महात्मनाम् । अगमत्पुष्करे

धर्म गर्दैन उसैका लागि निरन्तर नरक लोक तयार छन्, यसमा कुनै संदेह छैन ॥ १२ ॥ हे राजन् ! अब म दहीबाट निकालिएको सारवस्तु (नौनी) जस्तो त्यस महीनामा गेर्ने,पाप नाश गर्ने त्यो तिथिको बारेमा राम्रोसँग सुनाउँछु॥१३॥ मेष राशिमा सूर्य रहेका महापुण्यदायो चैत्रमहीनामा पर्ने औंसी सारा पापलाई नाश गर्ने र कोटिन् यज्ञको फल दिनेवाला छ॥१४॥ यस विषयमा सावर्णि मनुले पृथ्वीमा शासन गरेका बेलामा नरकमा रहेका पितृहरूलाई उद्देश्य गरेर कहिएको अत्यन्त पुरान् पुण्यदायी पितृगाथा (पितृहरूको कहानी) सुनिन्छ॥१५॥ तीसौं कलियुगको अन्तमा सबै धर्म हटिसकेपछि आनर्त देशमा'धर्मवर्ण'नामले प्रख्यात कुनै ब्राह्मण थिए॥१६॥ ती मुनि ब्राह्मणले घोर कलियुगमा मनुष्यहरूलाई पापमा लीन देखेर,चारै वर्णले धर्म छाडिएको कलिका पहिलो पाउमै॥१७॥ उनी कुनै बेला पुष्कर क्षेत्रमा मौन धारण गरेर यज्ञ



क्षेत्रे कुर्वतां मौनधारिणाम् ॥१८॥ तत्र चासन्पुण्यकथा ऋषीणां शास्त्रगोचराः तत्र केचित्कलियुगं प्रशशंसुर्धृतव्रताः ॥१९॥ कृते यद्वत्सरात्साध्यं पुण्यं माधवतोयणाम् । त्रेतायां मासतः साध्यं द्वापरे पक्षतो नृप ॥२०॥ तस्माद्दशगुणं पुण्यं कलौ विष्णुस्मृतेर्भवेत् । अत्यल्पमपि वै पुण्यं कलौ कोटिगुणं भवेत् ॥२१॥ दयापुण्यविहीने तु दानधर्मविवर्जिते । दयादानं न कुरुते सकृदुच्चार्य वै हरिम् ॥२२॥ स एवं चौर्ध्वगो नूनं दुर्भिक्षे चान्नदो यथा । एतत्प्रसङ्गावसरे नारदोऽभ्येत्य वै मुनिः ॥२३॥ करेणैकेन शिश्नं च जिह्वां चैकेन वै हसन् । प्रगृह्योन्मत्तवत्तत्र

गरिरहेका महात्मा मुनिहरूको पास गए॥१८॥उहाँ ऋषिहरूको बारेमा शास्त्रमा देखिएका पवित्र कथाहरूको चर्चा भइरहेका थिए। उहाँ नियममा रहने कति मुनिहरू कलियुगलाई प्रसंशा गरिरहेका थिए ॥१९॥हे राजन् ! विष्णु भगवान्लाई खुशी पार्ने पुण्य सत्ययुगमा जो एक वर्षमा सिद्ध हुन्थ्यो, त्यो पुण्य त्रेतामा एक महीनामै सिद्ध गर्न सकिन्थ्यो र द्वापरमा एकै पक्षमा सफल हुन्थ्यो॥२०॥त्योभन्दा दश गुना बेसी पुण्य कलियुगमा विष्णुलाई संझनेबित्तिकै हुन्छ। अलिकति पनि पुण्य कलियुगमा करोडौं गुना बेसी हुन्छ॥२१॥दया र पुण्यले हीन भएमा तथा दान र धर्मले रहित भएमा अनि दयारूपी दान नगरेमा पनि एकैपल्ट'हरि'भन्ने यो नाम उच्चारण गर्‍यो भने॥२२॥जस्तो अनिकाल परेको बेलामा अन्न दान गर्ने सोझै वैकुण्ठ जान्छ त्यस्तै त्यो हरि जप्ने निश्चय नै स्वर्ग जान्छ । यस्तै भाषण भैरहेको बेलामा नारद मुनि त्यहाँ आइ-

ननर्त मुनिपुङ्गवः ॥२४॥ सभ्यास्तदा तमित्यूचुः किमेतदितिनारद । प्रत्युवाच स तान् सर्वान् नृत्ययन् वै हसन्सुधीः ॥२५॥ सन्तोषाद्यदिह प्रोक्त नृत्यभिर्भावितात्मभिः । सिद्धा वयं न सन्देहः पुण्योऽयं कलिरागतः ॥२६॥ तत्सत्यं न च सन्देहो बहु स्वल्पेन साध्यते । स्मरणात्तोषमायाति केशवः क्लेशनाशनः ॥२७॥ तथापि वः प्रवक्ष्यामि दुर्घटं च द्वयं ध्रुवम् । शिश्नस्य निग्रहःपुत्रा जिह्वाया अपि नित्यशः ॥२८॥ द्वयं वशे भवेद्यस्य स एव स्याज्जनार्दनः । भवद्भिनात्र स्थातव्यं तस्मात् कलियुगागमे ॥२९॥ पाखण्ड भारतं हित्वा सञ्चरध्वं यथासुखम् । यत्र कुत्रापि देशेषु मनो

पुगेर॥२३॥ यौंटा हातले लिंग र अर्को हातले जिब्रो समातेर हाँस्तै ती मुनिश्रेष्ठ पालग झैं त्यहाँ नाच्न लागे ॥२४॥ तब त्यहाँ बसेका सभासद्हरूले ती मुनिलाई 'हे नारद ! यो के गरेको ?' भने । तब ती बुद्धिमान् मुनिले ती सबलाई नाच्तै हाँस्तै भने ॥२५॥ पुण्यात्मा भएका तपाइले नाच कीर्तन गर्दै सन्तोषपूर्वक जो यो भन्नुभयो, त्यसबाट हामी यो सिद्ध गर्दछौं कि थोरै प्रयासले सजिलैसित पुण्य मिल्ने यो कलिकाल आयो; यसमा कुनै सन्देह छैन॥२६॥कलिमा अलिकतिले पनि धेरै पुण्य मिल्दछ भन्ने त्यो कुरो साँचो हो,त्यसमा कुनै शंका छैन। जुनयुगमा दुःख नाशिदिने भगवान सम्झनाले पनि खुशी हुनुहुन्छ ।।२७॥ तथापि बाबूहो ! तिमीहरूलाई म भन्दछु कि सधैंभरि लिंगलाई र जिब्रोलाई वशमा गर्नु यी दुवै कुरा अवश्यै कठिन छ॥२८॥जसको यी दुवै वशमा हुन्छन् त्यो नै जन जनार्दन तुल्य हुन्छ । त्यसकारण यो कलि-युग आएपछि तपाईहरूले अब यहाँ बस्नु ठीक छैन॥२९॥त्यसकारण यो पाखण्डी भारतवर्षलाई छोडेर जुन कुनै पनि अरू









यत्र प्रसीदति॥३०॥ इति तद्वचनं श्रुत्वा मुनयः शंसितव्रताः । सत्रं समाप्य सहसा ययुस्ते च यथा-गतम् ॥३१॥ धर्मवर्णोऽपि तच्छ्रुत्वा त्यक्तुं भूमि मनोदधे । सव्रतं चोर्ध्वतेजस्कं धृत्वा दण्डकम-ण्डलू ॥३२॥ जटावल्कलधारी च भूत्वा चैवं ययौ पुनः । कलौयुगे त्वनाचारा द्रष्टुं विस्मितमा-नसः ॥३३॥ तत्रापश्यज्जनान् घोरान् पापाचाररतान् खलान् । पाखण्डिनो द्विजाः सर्वे शूद्रा प्रव्र-जिनस्तथा ॥३४॥ भर्तारं द्वेष्टि भार्या च शिष्यो द्वेष्टि गुरु तथा । भृत्यश्च स्वामिहन्ता च पुत्रः पितृवधोद्यतः ॥३५॥ शूद्रप्राया द्विजा सर्वे छागीप्रायश्च धेनवः । गाथाप्रायास्तथावेदाः क्रियासाम्यां

देशहरूमा जहाँ तपाईहरूको मन खुशी रहन्छ उहीं आनन्दपूर्वक यो कलियुगभरि रहनु बेस छ॥३०॥नारदको यस्तो वचन सुनेर नियमपूर्वकरहेका मुनिहरू तुरुन्तै यज्ञ सकेर ती जता-जताबाट आएका थिए उतै उतै गए॥३१॥धर्मवर्णले पनि त्यस्तो सुनेर त्यो ठाउँ त्याग्न चाहे र नियम तथा ब्रह्मचर्यमा रही दण्ड र कमण्डलु लिएर ॥३२॥ लट्टा बढाई, बोक्राको अलखा पहिरी फक्कड् भएर कलियुगमा हुने अनाचारहरूदेखें आश्चर्यचकित हुँदै उनीत्यहाँबाट हिंडे॥३३॥ जहाँ-जहाँ गए उहाँ-उहाँ उनले घोर पापकर्ममा लागेका दुष्ट मनुष्यहरूलाई देखे सारा बाहुनहरू पाखण्डी भएका छन्;शूद्रहरू सन्यासी भएका छन् ॥३४॥स्वास्नी लोग्नेलाई दाह्रा किट्तछन्, शिष्य गुरुसँग द्वेष गर्छ नोकर मालिकलाई मार्दछ छोरो बाबुलाई मार्न तंसिन्छ ॥३५॥ सबै बाहुन शूद्रसरिका छन्, गाईहरू बाख्रीजस्ता देखिछन्, वेद केवल फताकिन्छन मात्र, असल कामहरू सामान्य काम जस्ता भएका छन् ॥३६॥ उनले देखेका ठाउँहरूमा भूत-प्रेत, पिशाच आदि नै फल दिने देवता ठानिन्छन।

शुभाः क्रियाः ॥३६॥ भूतप्रेतपिशाचाद्याः फलदास्तत्र देवताः । ता एव श्रद्धयार्चन्ति जनाः पापरताः शठाः ॥३७॥ सर्वे व्यवायनिरतास्तदर्थे त्यक्तजीविताः । कूटसाक्ष्यप्रवक्तारः सदा कैतवमानसाः ॥३८॥ मनस्यन्यत् वचस्यन्यत् कर्मण्येन्यतत् सदा कलौ । सर्वेषां हेतुकी विद्या स पूज्या नृपमन्दिरे॥३९॥ गीताद्यारच कलाविद्या नृपाणां च प्रियावहाः । हीनाश्च पूज्यतां यान्ति नोत्तमाश्च कलौयुगे ॥४०॥ श्रोत्रियाश्च द्विजाः सर्वे दरिद्राः स्युः कलौ युगे ॥ विष्णुभक्तिर्नराणां तु प्रायश नैव वर्तते ॥४१॥ प्रायः पाखण्डभूयिष्ठं पुण्यक्षेत्रं भविष्यति । शूद्रा धर्मप्रवक्तारो जटिलास्तामसाः

पापमा रतिएका शठ मनुष्यहरू तिनैलाई नै श्रद्धापूर्वक पूजा गर्छन्॥३७॥ सारा कुकर्ममा लागेका छन् र कुकर्मका लागि नै हुरुक्क हुन्छन्,सबैं कपट मन भएकाहरू झूठो गवाही दिन्छन्॥३८॥ कलियुगमा हमेशा मान्छेहरू मनमा अर्कै सोच्छन्; मुखले भिन्नै चेप्याइ पार्थछन्,कामचाहिं अर्कै गर्छन् । सबैको मतलबी विद्या हुन्छ,दरबारमा पनि मतलबी विद्याका विद्वान् पूजिन्छन्॥३९॥गीत गाना-बजाना आदि कलाका विद्या नै राजाहरूको लागि प्रिय लाग्ने विद्या हुन्छन्, अर्थात् गीदाङ्गी र नटुवा नै दरबारमा सम्माननीय हुन्छन् । कलियुगमा नीच जातिका आसुरी विज्ञान विद्या जान्नेहरू पूजिन्छन्, ज्ञान विद्याका उत्तम विद्वान्हरू कसैले पुछिन्नन् ॥ ४० ॥ कलियुगमा सबै वैदिक ब्राह्मणहरू दरिद्र हुन्छन् । मनुष्यहरूमा ज्यादाजसो विष्णुभक्ति हुँदैन॥४१॥पुण्यक्षेत्र प्रायःजसो पाखण्डीहरूले भरिएको हुन्छ, कलियुगमा शूद्रहरू धर्मको व्याख्या

कलौ॥४२॥ सर्वे चाल्पायुषो मर्त्या दयाहीनाः शठा जनः । सर्वे धर्मप्रवक्तारः सर्वे च ग्रहणेच्छवः ॥४३॥ सुजनान्नोपगच्छन्ति वृथा निन्दापरायणाः । असूयानिरताः सर्वे गृहं याते परे प्रभौ ॥४४॥ भ्राता च भगिनीं गन्ता पिता पुत्रीं च वै कलौ । सर्वेऽपि शूद्रीनिरताः सर्वेवाराङ्गनारताः ॥४५॥ साधून्नैवावजानन्ति बहुपापांश्चमन्यते । व्यक्तीकुर्वन्ति साधूनां दोषमेकं दुराग्रहाः ॥४६॥ पापानां दोष जातानि गुणत्वेन वदन्ति हि । दोषमेव प्रगृह्णन्ति कलौ तु विगुणा जनाः ॥४७॥ जलूकः

दिने हुन्छन्, तमोगुणी लण्ठहरू जटाधारी जोगी हुन्छन् ।।४२।। कलिमा सबै मनुष्यहरू अल्पायुका हुन्छन्, दयाले हीन भएका सारा शठहरू धर्मको व्याख्या गर्ने हुन्छन् र ती सबै'के कति पाइन्छ' का इच्छुक हुन्छन्॥४३॥सज्जन माथि कोही, जाँदैनन्, बेकार अर्काको निन्दा गरिन्छन् सर्वोच्च अफिसर घर गएपछि सबै कर्मचारी उसको डाह गर्न लाग्छन् ॥४४॥ कलियुगमा दिदी-बहिनीसँग दाजु-भाई, छोरीसँग बाबु संगम गर्ने हुन्छन् । वेश्यैसे, लाचार सिद्ध वा लोभीबाहेक सारा लोग्नेमान्छेहरू शूद्रिनी भनेपछि मरिमेट्छन्, सबै नै फूंडीहरूमा लट्ठ रहन्छन् ॥४५॥ साधुहरूलाइ कोही कसै जतिको पनि गन्दैन, ठूलाठूला पापीहरूलाई भने खूब मान्छन् । ती दुष्ट हठीहरू साधुहरूको यौटै दोष पाए भने पनि फलाकी फलाकी हिंड्छन्॥४६॥पापीका दोषहरूलाई गुणैगुण बनाएर बखान गर्छन् । दूद (स्तन) मा टाँसिएको जुकोले दूध छोडेर

स्तनसंयुक्ता रक्तं पिबति नो पयः। रसाः स्वादुगुणान्हित्वा ऋतूनां व्यत्ययस्तथा ॥४८॥ दुर्भिक्षं सर्वराष्ट्रेषु कन्याऽकालेन सूयते। नटनर्तकविद्यासु प्रीतिमन्तो नराः कलौ ॥ ४९ ॥ वेदवेदान्तविद्यासु निरता ये गुणाधिकाः। भृत्यान्पश्यन्ति तान्मूढास्ते भ्रष्टाश्चाखिलाशिषः। ५०॥ त्यक्तश्राद्धक्रियाः सर्वे त्यक्तवेदोदितक्रियाः जिह्वायां विष्णुनामानि न वर्तन्ते कदाचन ॥५१॥ शृङ्गाररसनिर्वाणास्तद्गीतान्येव ते जगुः ॥५२॥ न विष्णुसेवा न च शास्त्रवार्ता न योगदीक्षा न

रगत मात्र पिएझैं कलियुगमा बेगुनी मानिसहरू गुणलाई छोडेर दोष मात्रै अँगाल्छन्। रस पनि मीठो गुणलाई त्याग्छन् अर्थात् नमीठा हुन्छन्, ऋतुहरू पनि उल्टापाल्टा हुन्छन्, अर्थात् एक ऋतुमा हुने कुरो अर्कै ऋतुमा हुने हुन्छ॥४७-४८॥ सारा राष्ट्रमा अनिकाल पर्छ, विवाह नगरेकी केटी उमेर नपुग्दै सुत्केरी हुन्छे, कलियुगमा मानिसहरू नटुवा र नचुवा विद्यामा प्रेम राख्ने हुन्छन् ॥ ४९ ॥ जो अधिक गुणवाला व्यक्ति वेद-वेदान्त विद्यामा श्रद्धा राख्छन् विचरा ती श्रद्धालुहरूलाई ती ठूला भैसकेका भ्रष्ट मूर्खहरू नोकर जस्ता मान्छन् ।।५०॥ सबैले मरेका पितृहरूको श्राद्ध गर्न छोडिएका छन्, वेदले बताएका क्रियाहरू गर्न छोडिसकेका छन्। कसैको पनि जिब्रामा कहिल्यै विष्णुको नाम छँदैछैनन् ॥ ५१ ॥ सारा जन शृङ्गार रसमा चुर्लुम्म डुबेका छन्, त्यै शृङ्गार रसका फोहोरी गन्दा गीतहरू नै ती हमेशा गाइरन्छन् वा गुनगुनाइरहन्छन् ॥ ५२ ॥ आश्चर्य छ कि कलियुगमा कहीं कुनै मनुष्यमा पनि विष्णुको सेवा हुन्थ्यो, न शास्त्रको वार्ता नै हुन्थ्यो, न





विचारलेशः। न तीर्थयात्रा न च दानधर्माः कलौ जने क्वापि बभूव चित्रम् ॥५३॥ तान् दृष्ट्वा धर्मवर्णोऽपि सुभीतोऽत्यन्तविस्मितः। वंशं पापात्क्षयं यातं दृष्ट्वा द्वीपान्तरं ययौ। सञ्चरन् सर्वद्वीपेषु लोकेष्वेव तु सर्वशः ॥५४॥ पितृलोकं ययौ धीमान् कदाचित्कौतुकान्वितः ॥ तत्रापश्यन्महाघोरान् भ्राम्यमाणांश्च कर्मभिः ॥ ५५ ॥ धावतो रोदमानांश्च पततः पातितानपि। तत्रापश्यच्चान्धकूपे पतितान् स्वान् पितॄनथ ॥ ५६ ॥ दूर्वाग्रलम्बिनो दीनान् दूर्वाच्छेदे हि कर्शितान्। तत्राखुः खादयत्यद्धा दूर्वामूल तदाश्रयम् ॥५७॥ तेन भागत्रयं चोत्तमेकों भागोऽव-

योगको दीक्षा नै थियो, न लेश मात्र पनि चिन्तन मनन नै थियो, न कहीं तीर्थयात्राको उत्सव नै थियो, न दान-धर्म नै गरिन्थ्यो ॥५३॥ कलिका प्रभावले उन्मत्त मैमत्त भएका त्यस्ता पापीहरूलाई देखेर बयँ डराएका र आश्चर्यचकित भएका धर्मवर्ण पनि पापले आफ्नू वंश पनि बिलाएको देखेर टापूतिर गए। सबै लोकहरूमा र सबै टापूहरूमा घुम्दै ॥ ५४ ॥ कुनै दिन सकसकिएका ती विद्वान् पितृलोकमा गए। उहाँ पुगेर अत्यन्त डरलाग्दा, आफ्ना पापकर्मले नरकमा रुमल्लिइरहेका, ।।५५॥ दौडिरहेका, रोइरहेका, लडिरहेका पापीहरूलाई र उहीं अन्धकूपमा जाकिएर दूबाको टुप्पोमा झुण्डिएकाले दुःखी भएका र दूबो चुँडिन्छ कि भनेर डरले हलन्टट्ट भएका आफना पितृहरूलाई पनि देखे। त्यस कुवामा तिनीहरूको आश्रय भएको दूबाको फेदलाई कुनै मूसाले कुटुकुट खाइरहेको थियो ॥५६-५७॥ त्यस मूसाले त्यस दूबाको

शेषितः तं दृष्ट्वा ते क्षीयमाणं मूलं दुःखेन कर्शिताः ॥५८॥ अधो दृष्ट्वा चान्धकूपं तत्पातादि-भीषणम् । दुरुत्तरं महाघोरं कर्मणात्तान् सुदुःखितान् ॥५९॥ अग्रे चापि दुरुत्तारमवलम्बविवर्जितम् । तान् दृष्ट्वा विस्मितो भूत्वा दयालुर्वाक्यमब्रवीत् ॥६०॥ के यूयं पतिता ह्यस्मिन् केन दुस्तरकर्मणा । कस्य गोत्रे समुत्पन्नाः कथं वै मुक्तिमाप्स्यथ ॥६१॥ एतद्यूयं वदध्वं मे शर्म वोऽद्य भविष्यति । इत्येवमुदितास्तेन पितरोऽथ सुदुःखिताः ॥६२॥ तमूचुः करुणां वाचं धर्मश्रुतिपुरः सराः । पितर

फेदको तीन भाग भाइसकेको थियो, केवल एक भाग मात्र बचेको थियो । त्यस चुङ्गिन लागेको फेदलाई देखेर पितृहरू दुःखले दुब्लाएका थिए ॥५८॥ कहि नसक्नु, अत्यन्त भयङ्कर कहालिलाग्दो, टेक्ने समात्ने केही नहुनाले अड्ने ठाउँ कतै नभएको, अगाडि पनि पार पाइ नसक्नु अन्धकूपमा तलतिर हेर्दा आफ्ना कर्मले अति दुःख पायेका ती पितृहरूलाई देखेर आश्चर्यचकित भई दयालु धर्मवर्णले यो कुरो भने—॥५९-६०॥ तपाईहरू को हुनुहुन्छ ? कुन पार पाइ नसक्नु कर्मले यस कुवामा जाकिनुभयेको छ ? कसको गोत्रमा जन्मनुभएको थियो ? के गरेदेखि यहाँबाट छुटकारा पाउनुहुन्छ ? ॥६१॥ यो सब कुरो तपाईहरू मलाई भन्नुहोस्, आजै तपाईहरूको कल्याण हुनेछ । उनले यसरी सोधिएका ती पितृहरू अनि अति दुःखित भयेर ॥६२॥ धर्म र श्रु ति अगाडि सारी दयालाग्दो कुरो उनलाई भने—। पितृहरूले भने—हामी श्रीवत्स



ऊचुः । वयं श्रीवत्सगोत्रीया भुवि सन्तानवर्जिताः ॥६३॥ विपिण्डा श्राद्धहीनाश्च तेन पच्यामहे वयम् । निःसन्तानोऽपि नो वंशो जातः पापैः कलौ युगे ॥६४॥ नास्माकं पिण्डदश्चास्ति वंशे पापात्क्षयंगते । तेनान्धकूपे पतनं निस्तन्तूनां दुरात्मनाम् ॥६५॥ एको हि वर्तते वंशे धर्मवर्णो महायशाः । स विरक्तश्चरँल्लोकान्न गार्हस्थ्यमुपेयिवान् ॥६६॥ तन्तुना तेन बध्नामो दूर्वानाला-वलम्बिन । निःस्तम्बत्वाच्च तन्मूलमाखुः खादति प्रत्यहम् ॥६७॥ एकस्यैवावशिष्टत्वात् किञ्चिन्मूलावशेषितः । आखुना खाद्यमानश्च वर्तते सौम्य पश्यताम् ॥६८॥ तस्य चायुःक्षये

गोत्री हौं, पृथ्वीतलमा निःसन्तान थियौं ॥६३॥ हामीहरू पिण्ड नपाउने, श्राद्ध नगरिनेभयौं, त्यसैले गर्दा यसरी दुःखपाइ-रहेका छौं । कलियुगमा पापको कारण हामीहरूको वंश पनि निःसन्तान भयो ॥६४॥ पापले वंशक्षय भएको हुनाले हामीहरूलाई पिण्ड दिने पनि कोही भएन । त्यसै कारणले वंशरूपी तन्तु ( सत्र-आधार ) नभयेका पापी हामीहरूको पतन यो अन्धकूपमा भयेको छ ॥६५॥ वंशमा यौटै ठूलोयशस्वी धर्मवर्णभनिने सन्तान छ । उपनि विरक्त भएर संसारमाघुमि-हिंडेकाले गृहस्थ आश्रममा रहेन ।६६।त्यसै तन्तुले गर्दा नै दूर्वाको ढाँठमा झुण्डिएर हामी छटपटाइरहेका छौं, त्यो दूबो पनि नझांगिएकोले त्यसको जरोलाई रोजै मूसो काटिरहेको छ ॥६७॥ वंशमा यौटै सन्तान बचेको हुनाले यो दूबोको फेद केही बाँकी छ । हे सौम्य ! त्यो पनि हेर ! मूसाले खाइँदैछ ॥६८॥ हे बाबु ! त्यो सन्तानको आयु सकिएपछि बाँकीरहेको

तात शेषमाखुर्हरिष्यति । पश्चात्कूपे पतिष्यामो दुरुत्तारेऽन्धतामसे ॥६९॥ तस्मात्त्वं च भुवं गत्वा धर्मवर्णं प्रबोधय । अस्मद्वाक्यैर्दयापात्रैर्गार्हस्थ्ये विमुखं मुनिम् ॥ ७० ॥ पितरस्ते भृशार्ता हि नरके पतिता मया । अन्धकूपे दुरुत्तारे दृष्टा दूर्वावलम्बिनः ॥७१॥ सा दूर्वा वंशरूपा हि तन्मूलं सन्ततिर्मुने । कालाख्ये मूषकस्तस्य मूलं खादति प्रत्यहम् ॥७२॥ वंशनाशोऽनुक्रमत एकस्त्वं चावशेषितः । तेनमूलस्य दूर्वाया नष्टं भागत्रयं मुने ॥७३॥ एको भागीऽवशिष्टोऽत्र यदस्त्वं वमते भुवि । किञ्चित्खादति वै त्वाखुस्तव चायुः क्षयः क्रमात् ॥ ७४ ॥ परेते त्वयि

भाग पनि मूसाले सफाचट पार्नेछ । त्यसपछि हामीहरू उत्रिनसक्नु अन्धकूप कुवामा झर्नेछौं॥६९॥ अतः तिमीले पृथ्वीमा गएर गृहस्थ आश्रममा विमुख भएको अर्थात् गृहस्थी जीवन मन नपराउने त्यो धर्मवर्णलाई दयाकापात्र हामीहरूले भनेका कुरा संझाइदेऊ ॥७०॥ मास्तिर आइनसक्नु अन्धकूप नरकमा जाकिएका, दूबाको टुप्पोमा झुण्डिएर अत्यन्त आर्त पुकार गरिरहेका तिम्रा पितृहरूलाई मैले देखें ॥७१॥ हे मुनि ! त्यो दूबो वंशरूप हो । त्यसको फेद नै न्सतान हो काल (समय) नामको मूसो त्यसको फेदलाई सधैं खाइरहेको छ ॥७२॥ क्रमैले वंशको नाश भयो, तिमी एउटै बाँकी रहेका छौ । त्यसैले हे मुनि ! दूबाका फेदको तीन भाग खतम भैसकेको छ ॥७३॥ तिमी पृथ्वीतलमा नै हुनाले दूबोको एक भाग बचेको छ । तिम्रो आयुको क्षय-अनुसार मूसाले केही-केही खाईरहेको छ ॥७४॥ तिमी मरेपछि हाम्रो र तिम्रो पनि अन्धतामिस्र





चास्माकं तवापि पतनं भवेत् । कूपएवान्धतामिस्रे सन्तानेऽपि क्षयं गते ॥ ७५ ॥ तस्माद्गार्हस्थ्यमास्थाय कुरु सन्तति वर्द्धनम् । तेनास्माकं तवापि स्याद्गतिरूर्ध्वा न संशयः ॥ ७६ ॥ एष्टव्या बहवः पुत्रा यद्येकोऽपि गयां व्रजेत् । यजेत वाऽश्वमेधेन नीलं वा वृषमुत्सृजेत् ॥ ७७ ॥ यद्येकोऽपि च वैशाखे माघे वा कार्तिकेऽपि वा । अस्मानुद्दिश्य वै स्नानं श्राद्धं दानं करिष्यति ॥ ७८ ॥ तेन चोर्ध्वगतिर्भूयान्नरकादुद्धृतिश्च नः । एको वा विष्णुभक्तः स्यादेको वा हरिवासरो ॥ ७९ ॥ एको वा शृणुयाद्विष्णोः कथां पापविना

कुवामा निःसन्तान भएकाले पतन हुनेछ ॥७५॥ त्यसकारण गृहस्थ धर्ममारहेर संतान बढाउने काम गर । त्यसले हाम्रो र तिम्रो पनि ऊर्ध्वगति हुनेछ यसमा कुनै संशय छैन ॥७६॥ धेरै छोराहरू जन्माउनुपर्छ, तिनमध्ये यदि एउटाले पनि गया गयो भने, अश्वमेध यज्ञ गऱ्यो भने, नीलो बहर साँढे छोड्यो भने ॥७७॥ यदि यौटाले पनि वैशाख, माघमा अथवा कात्तिकमा हामीहरूलाई उद्देश्य गरेर स्नान, श्राद्ध, दान गऱ्यो भने ॥७८॥ त्यस पुण्यले नरबाट हामीहरू उद्धार हुछ र ऊर्ध्वगति, स्वर्ग जाने शक्ति हुनेछ । यौटै पनि विष्णुभक्त भयो भने, यौटै छोरो पनि एकादशीको व्रत लिने भयो भने ॥७९॥ यौटैले पनि समस्त पाप नाश गर्ने भगवान्को कथा सुन्यो भने, त्यसका पितेका — कुलले र पछि

शिनीम् । तस्यातीतं कुलशतं भावि चापि कुलं शतम् ॥ ८० ॥ अपि पापसमावृत्तं नरकं नैव पश्यति । किमन्यैर्बहुभिः पुत्रैर्दयाधर्मविवर्जितैः ॥८१॥ ये जाता नार्चयन्त्यद्धा विष्णुं नारायणं कुले । नापुत्रस्य हि लोकोऽस्ति सर्वमेतज्जना विदुः ॥८२॥ तत्रापि च दयायुक्तं ततसन्तानं च दुर्लभम् । इति तं बोधयित्वा तु वाक्यैरेतैश्च सूनृतैः ॥८३॥ विरक्तश्चोर्ध्वरेताश्च गार्हस्थ्ये त्वं मतिं कुरु । पितॄणां वचनं श्रुत्वा धर्मवर्णोऽतिविस्मितः ॥८४॥ प्रणम्य प्राञ्जलिः प्राह रुदन् वै जातवेपथुः । नाम्नाहं धर्मवर्णश्च युष्मद्वंश्यो दुराग्रही ॥ ८५ ॥ सत्रे श्रुत्वा तु वचनं नारदस्य

हुने सय कुलले ॥८०॥ पापी नै भए पनि नरक देख्नेछैन । कुलमा जन्मेर जो नारायण विष्णुको कहिल्यै पूजा गर्दैनन् त्यस्ता दया र धर्म न भएका अरू धेरै छोराले के हुन्छ? अपुत्री पुरुषको कुनै लोक छैन भन्ने यो सब त सबै जना जान्दछन् ॥८१-८२॥ तिनमा पनि दयालु सन्तान त झन् दुर्लभ छ । यस्ता प्रकारले साँचा यी कुराहरूले उसलाई संझाएर ॥८३॥ विरक्त र बालब्रह्मचारी तिमीले गृहस्थ आश्रममा रहने बुद्धि गर । पितृहरूको यस्तो वचन सुनेर अति आश्चर्य भएका धर्मवर्णले ॥८४॥ प्रणाम गरेर थरथर काँपी हात जोडेर रुँ दै भने—तपाईहरूको वंशको बीँडो धर्मवर्ण नाम हुने हठी मै हुँ ॥८५॥ कलियुगमा कसैको पनि जिभ्रो र लिङ्ग आफ्नू वशमा रहन सक्नेछैन भन्ने पुष्करक्षेत्रको यज्ञथलमा नारदजीको

---





महात्मनः । जिह्वादार्ढ्यं गुह्यदार्ढ्यं न कस्यापि कलाविति ॥ ८६ ॥ दृष्ट्वा भुवि च पापिष्ठांस्तान् जनानभिशङ्कितः । भीतो दुर्जनसंगत्या चरन् द्वीपान्तरे वसन् ॥ ८७ ॥ पादास्त्रयो गता ह्यस्य कलेः पादेऽन्तिमेऽपि च । गताः सार्द्धत्रयो भागा इदानीं जनका इमे ॥ ८८ ॥ नाहं वेद्मि भवद्दुःखं वृथा जन्मगतं मम । यस्मिन् कुले त्वहं जात ऋणं पित्रोर्न वै हृतम् ॥८९॥ किं तेन जातमात्रेण भूभारेणान्नशत्रुणा । यो जातो नार्चयेद्विष्णुं पितॄन् देवानृषींस्तथा ॥९०॥ युष्मदाज्ञां करिष्यामि मामज्ञापयत क्षितौ । यथा न कश्चिद्बाधा स्यात्तत्र संसारतोऽपि वा ॥९१॥

वचन सुनेर ॥८६॥ र पृथ्वीमा पनि ती अति पापी मनुष्यहरूलाई देखेर शंकित भएको म दुर्जनहरूको संगतबाट डराएर अरू-अरू द्वीपहरूमा घुम्दै रहको छु ॥ ८७ ॥ हे मेरा पूज्य पितृ हो ! यस कलिका तीन पाउ बितिसके, अन्तिम पाउमा पनि यतिखेर अरू साढे तीन भाग खतम भैसके ॥ ८८ ॥ अहिलेसम्म पनि तपाईहरूको दुःख मैले जान्न सकिनँ, मेरो जन्म बेकार गयो । जुन कुलमा म पैदा भएँ, उस कुलको पितृको ऋण चुकाइनँ ॥ ८९ ॥ जो जन्मीकन भगवान् विष्णुलाई पितृहरूलाई, देवताहरूलाई र ऋषिहरूलाई पुज्दैन, अन्नको शत्रु, पृथ्वीको भार त्यस्ता शठले जन्मिएर के काम ? ॥९०॥ म तपाईहरूको आज्ञालाई पूरा गर्दछु,तर त्यस्तो आज्ञा मलाई दिनुहोस् जुन आज्ञाले पृथ्वीमा रहंदा सांसारिक र कलिको बाधा नहोस ॥ ९१ ॥ अब तपाईहरूको छोरो मैले पृथ्वीतलमा गर्नुपर्ने काम गर्छु । त्यो वंशको बीँडोले यति भनिएका

कर्तव्यान्यपि कृत्यानि मया पुत्रेण भूतले । इत्युक्तास्तेन वंश्येन धर्मवर्णेन धीमता ॥९२॥
किञ्चिदाश्वस्तमनसं इदमूचुर्महीपते । पुत्र वश्य दशामेतां पितृणां ते महात्मनाम् ॥९३॥
सन्तत्यभावात्पततां दूर्वामात्रावलम्बिनाम् । त्वं गार्हस्थ्यमुपालभ्य संतत्यास्मान् समुद्धर ॥९४॥
ये च विष्णुकथासक्ता ये स्मरन्त्यनिशं हरिम् । ये सदाचारनिरता न तान्वै बाधते कलिः ॥९५॥
शालिग्रामशिला यस्य गृहे तिष्ठति मानद । अथवा भारतं गेहे न तं वै बाधते कलिः ॥९६॥
विष्णोर्निवेदितान्नं च वर्तते यस्य चोदरे । कर्णे वा तुलसीपत्रं न तं वै बाधते कलिः ॥९७।

पितृहरू ॥ ९२ ॥ क्यै दुःखी भएर हे राजन् ! यस्तो भन्न थाले —हे पुत्र ! सन्तान नहुनाले नरकमा गिरेको उहाँ पनि दूबाको त्यान्द्रोमा झुण्डिरहेका महात्मा तिम्रा पितृहरूका यो दशा हेर। अब तिमी गृहस्थ आश्रममा रहेर सन्तानद्वारा हाम्रो उद्धार गर ॥९३-९४॥ जो विष्णु भगवान्को कथा सुन्न मनमा आसक्त रहन्छन्, जो हमेशा हरिलाई संझन्छन्, जो सदाचारमा अटल छन्, तिनीहरूलाई कलिले बाधा गर्दैन॥९५॥हे विनम्र पुत्र ! जसको घरमा शालिग्राम शिला रहन्छ अथवा जसको घरमा महाभारतको पुस्तक रहन्छ, त्यसलाई कलिले बाधा गर्न सक्तैन ॥९६॥ जसको पेटमा विष्णु भगवान्‌लाई भोग लगाएको अन्न रहन्छ, जसको कानमा तुलसीको पत्र रहन्छ उसलाई कलिले बाधा गर्न सक्तैन ॥ ९७ ॥ जसको



---



यत्करे तुलसीमाला यद्धस्ते च पवित्रकम् ॥ यज्जिह्वायां हरेर्नाम न तं वै बाधते कलिः ॥९८॥
यश्च वैशाखनिरतो माघस्नानपरश्च यः ॥ कार्तिके दीपदाता यो न तं वै बाधते कलिः ॥९९॥
प्रत्यहं शृणुयाद्यस्तु कथां विष्णोर्महात्मनः ॥ पापघ्नीं मोक्षदां दिव्यां न तं वै बाधते कलिः॥१००
यद्गृहे वैश्वदेवश्च यद्गृहे तुलसी शुभा । यस्याङ्गणे शुभा गौश्च न तं वै बाधते कलिः ॥१॥
तस्माच्चैव च पुत्र त्वं युगे पापात्मकेऽपि च । शीघ्रं गच्छ भुवं पुत्र मासोऽयं माधवाह्वयः ॥२॥
सर्वेषामुपकाराय मेषसंस्थे दिवाकरे ॥ त्रिंशच्च तिथयः पुण्या महापुण्यप्रदायकाः ॥१०३॥

हातमा तुलसीको माला रहन्छ, जसका हातमा 'पवित्र' रहन्छ, जसको जिब्रोका हरिको नाम छ उसलाई कलिले बाधा गर्न सक्तैन ॥९८॥ जो वैशाख धर्ममा लागेको छ अथवा जो माघ महीनाभरि न्वाहुँदछ, या जो कात्तिकमा दीपदान गर्दछ उसलाई कलिले बाधा गर्दैन ॥९९॥ जो जन दिनहुँ पाप नाश्ने मोक्ष दिने, अति सुन्दर महात्मा विष्णुको कथा सुन्दछ उसलाई कलिले बाधा गर्न सक्तैन ॥ १०० ॥ जनको घरमा वैश्वदेव हुन्छ, जसको घरमा कल्याणकारी तुलसी छ जसको आँगनमा शुभ दिने गाई रहिन्छन् उसलाई कलिले बाधा गर्न सक्तैन ॥ १०१ ॥ त्यसकारण हे पुत्र ! पापात्मा युग भए पनि हे बाबु ! तिमी झट्टै पृथ्वीतलमा जाऊ, किनकि यो वैशाख नामको महीना हो ॥ १०२ ॥ मेष राशिमा सूर्य रहेको वेलामा प्राणी मात्रको उपकारका लागि शुक्ल कृष्णका गरी तीसै ओटा पुण्यदायी तिथिहरू धेरै धेरै पुण्य दिनेवाला हुन्छन् ॥ १०३ ॥ प्रत्येक तिथिमा गरेका पुण्य कोटिन-कोटिन बेसी गुणवाला हुन्छ । तिनमा पनि

एकैकस्यां कृतं पुण्यं कोटिकोटिगुणं भवेत् । तत्रापि चैत्रबहुलो दर्शो नृणां च मुक्तिदः ॥४॥
प्रियश्च सोऽपि देवानां सद्यो मुक्तिविधायकः । ये वै पितृन् समुद्दिश्य श्राद्धं कुर्वन्ति तद्दिने ॥५॥
सोदकुम्भं पिण्डदानं तदक्षय्यफलं भवेत् । ये च कुर्वन्ति वै श्राद्धममायां च मधौ सुत ॥६॥
तैः कृता तु गयाक्षेत्रे श्राद्धकोटिर्न संशयः । यदि चाद्धा मधौ दर्शे शाकेनापि च श्राद्धकृत् ॥७॥
कोटिश्राद्धं गायायां तु कृतं तेन न संशयः । कुम्भं च पानकैः पूर्णं कर्पूरागुरुवासितम् ॥८॥
यो न दद्यान्मधौ दर्शे स पितृघ्नो न संशयः । यो दद्याच्च मधौ दर्शे सपानीयं करीरकम् ॥९॥

चैत्रकृष्णको औंसी मनुष्यहरूलाई मुक्ति दिनेवाला छ ॥१०४॥ यो तिथि देवताहरूको अति प्रिय छ । यो तिथि तुरुन्तै मुक्ति दिनेवाला छ । जो मनुष्यहरू आफना पितृको उद्देश्य गरेर त्यस दिन श्राद्ध गर्दछन्॥१०॥॥ र पानीले भरिएका घैला तथा पिण्डदान गर्छन् त्यो अक्षय फल दिनेवाला हुन्छ । हे पुत्र ! जो जन चैत्रकृष्ण औंसीमा श्राद्ध गर्दछन्॥१०६॥ तिनीहरूले गयाक्षेत्रमा गएर कोटिन् श्राद्ध गरे भने पनि हुन्छ,यसमा कुनै दुविधा छैन । यदि चैतको औंसीमा यथाशक्ति सागैले पनि कोही श्राद्ध गर्छ भने ॥१०७॥उसले गयामा गएर कोटियौं श्राद्ध गऱ्यो भने हुन्छ, यसमा क्यै शंका छैन । कपूर र कुमकुमले गमगमाएको सरबतले भरिएको घडा॥१०८॥जो जन चैत्रकृष्ण औंसीमा दान गर्दैन त्यो जन पितृघाती हो, यसमा कुनै सन्देह छैन । जुन जन चैतका औंसी तिथिमा पानीले भरिएको घडा सहित ककड़ी या काँको दान गर्छ॥१०९॥





श्राद्धं च भक्तिसंयुक्तः कुरुते कुलोद्धृतिम् । पितृणां च तदा लोके नदी चामृतवर्षिणी । १०॥
कुम्भदानात्प्रस्रवति श्राद्धदानाद्ध्रुवा इमे । अन्नसूपघृतापूपलेह्यपायसकर्दमान् ॥११॥ तस्मा-
ज्झटिति त्वं गच्छ यदा चामा भविष्यति । कुरु श्राद्धं पिण्डदानं सोदकुम्भं महामते ॥१२॥
सर्वेषामुपकाराय गार्हस्थ्यं च समाश्रय । धर्मार्थकामैः संतुष्टः प्राप्य सन्तानमुत्तमम् ॥१३॥
पुनश्च मुनिवृत्तिस्त्वं सुखं द्वीपेषु सञ्चर । इत्यादिष्टः पितृभिश्च तूर्णं भूमिं ययौ मुनिः ॥१४॥
चैत्रे मासे मेषसंस्थे पुण्ये तस्मिन् दिवाकरे । प्रातः स्नात्वा च संतर्प्य पितृन् देवानृषींस्तथा

र कुलको उद्धारका लागि भक्तिपूर्वक श्राद्ध गर्छ भने त्यस प्रभावले पितृहरूको लोकमा अमृत वर्षने नदी बग्दछ ॥११०॥ त्यस दिन जल भरिएको घडा दान दिएर श्रद्धापूर्वक श्राद्ध गर्नाले पितृलोकमा दाल-भात-घिउ-मालपूआ-अचार-चटनी लबा-लब भएको खीर यी सबै चीज अवश्यै खोलो लाग्छ॥१११॥त्यसकारण हे महामति! झट्टै तिमी जाऊ र जब औंसी आउँछ त्यस दिन जल भरिएको घडा-दान र पिण्ड-दान दिई श्राद्ध गर॥११२॥हे बाबु ! जाऊ,सारा पितृहरूको उपकारका लागि गृहस्थ आश्रममा रहु र धर्म, अर्थ, कामलेसन्तुष्ट भएर उत्तम सन्तान पैदा गर॥११३॥त्यसपछि फेरि मुनिको वृत्ति लिएर तिमी सुखपूर्वक द्वीपहरूमा घुमे । यसरी अह्राइएका ती मुनि तुरुन्तै पृथ्वीतलमा गए ॥ ११४ ॥ मेषमा सूर्य रहेको त्यस पुण्य चैत महीनामा बिहानै न्वाहेर पितृहरूलाई, दौतांहरूलाई ऋषिहरूलाई, तर्पण दिएर ॥ ११५ ॥ पाप नाश

॥१५॥ सोदकुम्भं तथा श्राद्धं कृत्वा पापविनाशनम् । तेन चाभूत् पितृणां हि मुक्तिमावृत्तिवर्जिताम् ॥१६॥ स्वयं विवाहमकरोत्सन्ततिं प्राप्य वै सतीम् । लोके प्रख्यापयामास तां तिथि पापनाशिनीम् ॥१७॥ स्वयं पुनर्मुनिर्भूत्वा गन्धमादनमाययौ । तस्मात्पुण्यतमश्चेव मधौदर्शः शुभावहः । नानेन सदृशी लोके तिथिर्दृष्टा श्रुताऽपि वा ॥१८॥



इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे कलिधर्मनिरूपणे धर्मवर्णपितृमुक्तिर्नाम द्वाविंशोऽध्यायः ॥२२ ।

गर्ने श्राद्ध र जलले भरिएको घड़ा दान गरिदिए । त्यस दान र श्राद्धका प्रभावले उनका पितृहरूको कहिल्यै फर्कनु नपर्ने मुक्ति भयो॥११६॥अनि आफूले पनि विवाह गरेर, सज्जन सन्तान पैदा गरी उनले समस्त पाप नाश गर्ने त्यो चैत्रकृष्ण अमावास्यालाई विश्वमा प्रसिद्ध गरिदिए ॥११७। पछि फेरि आफू मुनि भएर गन्धमादनमा पुगे । त्यसकारण कल्याण गर्ने चैतको औंसी अत्यन्तै पुण्य तिथि हो । विश्वमा यो झैं उतम तिथि न कसैले देखेको छ,न कसैले सुनेको छ॥११८॥

श्री स्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीष सम्वादमा कलिधर्म निरूपण र धर्मवर्णका पितृमुक्ति नामको बाइसौं अध्याय सकियो ॥ २२ ॥



# अथ त्रयोविंशोऽध्यायः

श्रुतदेव उवाच । अथातःसंप्रवक्ष्यामि माहात्म्यं पापनाशनम् । अक्षय्यायास्तृतीयायाः सिते पक्षे च माधवे ॥१॥ ये कुर्वन्ति च तस्यां वै प्रातःस्नानं भगोदये । ते सर्वे पापनिर्मुक्ताः यान्ति विष्णोः परं पदम् ॥२॥ देवान् पितॄन् मुनीन्यस्तु कुर्यादुदिश्य तर्पणम् । तेनाधीतं च तेनेष्टं तेन श्राद्धशतं कृतम् ॥३॥ मधुसूदनमभ्यर्च्य कथां शृण्वन्ति ये नराः अक्षय्यायां तृतीयायां ते नरा मुक्तिभागिनः ॥४॥ ये दान तत्र कुर्वन्ति मधुद्विट्प्रीतये शुभम् । तदक्षय्यं फलत्येव



श्रुतदेवजीले भन्नुभयो—अब म वैशाखको शुक्लपक्षमा पर्ने अक्षयतृतीयाको पापनाशक महिमा सुनाउँछु॥१॥ जुन मनुष्यहरू त्यस तृतीयामा सूर्योदय हुने समयमा प्रातः स्नान गर्दछन्, ती सबै पापबाट छुटेर विष्णुको परमपदमा पुग्छन् ॥ २ ॥ जसले त्यस दिन देवता, पितृ, मुनिहरूका लागि उनीहरूलाई उद्देश्य गरेर तर्पण दिन्छ, उसैले सबै शास्त्र पढ्यो, उसैले सबै यज्ञ गऱ्यो र उसैले सय श्राद्ध गऱ्यो भनिठाने हुन्छ ॥३॥ जुन मनुष्यहरू अक्षय तृतीयाका उस दिन मधुसूदन भगवान्को पूजा गरेर उहाँको कथा सुन्दछन् ती नै मनुष्यहरू मुक्ति पाउने हुन्छन् ॥४॥ जुन मनुष्यहरू दिन मधुसूदन भगवान्लाई खुशी पार्ने असल दान गर्दछन्,मधुसूदन भगवान्को आज्ञाले त्यो दान अक्षय अर्थात् कहिल्यै पनि नघट्ने

मधुसूदनशासनात् ॥ ५ ॥ देवर्षिपितृदैवत्या तिथिरेषा शुभावहा । त्रयाणां तृप्तिदात्री च कृते धर्मे सनातने ॥ ६ ॥ प्रख्यातिश्च तिथेरस्याः केन चासीत्तदप्यहम् । वक्ष्यामि नृपशार्दूल सावधानमनाः शृणु ॥ ७ ॥ पुरा पुरन्दरस्यासीद्युद्धं च बलिना सह । देवानां चैव दैत्यानां द्वन्द्वयुद्धमभूत्तदा ॥ ८ ॥ स निर्जित्य बलिं दैत्यं पातालतलवासिनम् । पुनर्भुवं समासाद्य चोतथ्यस्याश्रमं ययौ ॥ ९ ॥ तत्रापश्यच्च तत्पत्नीं गुर्विणीं मन्दगामिनीम् । चलच्छ्रोणितटा बद्धरत्नकाञ्चीं सुमध्यमाम् ॥ १० ॥ क्वणत्कङ्कणनिक्वाणजितमत्तालिकोकिलाम् । वल्गुचित्राम्बरां रामां मञ्जुवाचं

भएर फल्छ ॥५॥ यो कल्याणकारी तिथि यौता ऋषि; पितृलाई खुशी पार्ने तिथि हो । सनातन धर्म गरेमा ती तीनैलाई तृप्ति दिने तिथि हो ॥६॥ हे राजाहरूमा श्रेष्ठ राजा ! के कारणले यो तिथिको ख्याति भयो, त्यो पनि म तिमीलाई बताउँछु, शान्त भएर सुन ॥७॥ पहिल्यै इन्द्रको दैत्यराज बलिसित युद्ध भएको थियो, त्यस बेला देवताको र दैत्यहरूको खुब कुस्ताकुस्ती भयो ॥८॥ इन्द्रले पातालमा बस्ने दैत्य बलिलाई जितेर, फेरि पृथ्वीमा आएर उतथ्य ऋषिको आश्रममा गए ॥९॥ उहाँ तिनले उतथ्यकी पत्नीलाई देखे—भारी (दोजिया) भएकी हुनाले बिस्तारै हिंड्ने; कम्मरमा बाँधेको रत्नजडित काञ्चो हल्लिरहेकोले अति राम्रो कम्मर भएकी॥१०॥ छम-छम बज्ने पाउजेब, कङ्कीका आवाजले उन्मत्त भमरा र कोइलीको सोरलाई जितेकी, चित्रविचित्र बहुमूल्य लुगा लगाएकी, मीठो बोल्ने मुसुक हाँस्ने, राम्री ॥ ११ ॥

शुचिस्मिताम् ॥ ११ ॥ लसत्कुम्भस्थलाभ्यां च कुचाभ्यामुपशोभिताम् । लसत्पद्ममुखां दिव्यां नीलोत्पलसुलोचनाम् ॥ १२ ॥ केतक्युदरपाण्डुभ्यां गण्डाभ्यां च मनोरमाम् । श्रमोच्छ्वसन्तीं दीनाक्षीं पर्णशालामुखे स्थिताम् ॥ १३ ॥ स्वपतीं शयने क्वापि दृष्ट्वा तां मोहमागतः बलात्कारेण बुभुजे गुर्विणी पाकशासनः ॥ १४ ॥ गर्भस्थस्तु तदा पिण्डः स्वस्य पातविशङ्कया । छादयामास वै योनेर्द्वारं पादेन दुःखित ॥ १५ ॥ ततश्चस्कन्द वीर्यं तद्भूमावेव बलद्विषः । सगर्भस्यामु चुकोपासौ भगवान् पाकशासनः ॥१६॥ तं शशाप च गर्भस्थं रुषा ताम्रान्तलोचनः । जात्यन्धो भव दुर्बुद्धे माऽवमंस्था यतः पदा ॥१७॥ प्रच्छाद्य योनिद्वारं च ततो दीर्घतुमाह्वयः ।

कुम्भस्थल जस्ता थलथले दुइ कुचले शोभिएकी, फूलेको सेतो कमल जस्तो दिव्य मुख भएको, नीलकमलको कोपिल जस्ता आँखावाली ॥ १२ ॥ केतकी फूल भित्रको केशरजस्तो सेतोमा कयै पहेंलो मिलेको दुइ गालाले असाढे राम्री देखिने, बढा कठिनले सास फेर्ने, कमजोर आँखावाली पर्णशालाको अगाडि रहेकी ॥१३॥ कुनै डोरीको खाटमा पल्टेकी ती उतथ्यकी पत्नीलाई देखेर मोहित रहेका इन्द्रले सहिनसक्नु भएर जबर्जस्ती ती गर्भिणीलाई भोग गरे ॥ १४ ॥ तब गर्भभित्र रहेको पिण्डले आफू गिर्ने शङ्काले दुःखित भएर गोडाले योनिकोद्वार थुनिदियो॥१५॥तब कामले तातेका इन्द्रको त्यो वीर्य भुइंमा झर्‍यो । तब ती भगवान् इन्द्र गर्भमा रहेको बालकप्रति रिसाए॥१६॥ र क्रोधले रातराता आँखा भएका इन्द्रले त्यो योनिमा रहेको बालकलाई गोडाले योनिको द्वार रोकिदिइस्, यसकारण जन्मदै अन्धो भएस् भनी सरापे ॥ १७ ॥ तब योनिको

वैशाख
२६९

पदात्प्रस्कन्दितात्वीर्याज्जयन्तः समजायत ॥१८॥ पश्चादिन्द्रो ययौ शीघ्रमृषेः शापविशङ्कितः । पलायन्तं हरिं दृष्ट्वा जहसुर्वटवोऽखिलाः ॥१९॥ ततस्तुत्राडितो भूत्वा ययौ मेरोर्महागुहाम् । तत्र लीनश्चचारासौ दुस्तरं वै तपो महत् ॥२०॥ मेरौ विलीय वसति देवेन्द्रे लज्जयान्विते । गूढैर्विज्ञाय तां वार्ता दैतेया बलिपूर्वकाः ॥ २१ ॥ स्वर्गमाक्रम्य बुभुजुर्देवेन्द्रस्यामरावतीम् । दिक्पालानां विभूतीश्च शम्बराद्या बलीयसः ॥२२॥ बलाद् बुभुजिरे हीननाथे राष्ट्रे दिवौकसाम् । रक्षितारमजानन्तो देवाश्चाग्निपुरोगमाः ॥२३॥ पप्रच्छुर्धिषणं देवं देवाचार्यमकल्मषम् ।

मा०
अ.२३

द्वारलाई छेकेर रहेको गोडाबाट खसेको वीर्यद्वारा वीर्यवनमा(?) जयन्त जन्मियो ॥१८॥ त्यसपछि ऋषिका श्रापको शंकाले इन्द्र तुरुन्तै भागे । भागेका इन्द्रलाई देखेर उतथ्यका शिष्यहरू हाँस्न थाले ॥१९॥ तब लज्जित भएर ती इन्द्र मेरु पर्वतका ठूलो गुफामा गए । उहाँ पुगेर लुकेर बसेर अति कठिन तपस्या गर्न थाले ॥२०॥ लाजले शर्मिन्दा भएको देवेन्द्र मेरु गिरिमा लुकेर बस्तछ भन्ने त्यो कुरो गुप्तचरहरूबाट थाहा पाएर, बलिलाई नेता बनाएका दैत्यहरूले ॥२१॥ स्वर्गमा आक्रमण गरेर देवेन्द्रको अमरावती भोग गरे । शम्बर आदि बलिया दानवहरूले दिक्पालहरूको ऐश्वर्य ॥२२॥ दौताहरूको स्वामी विनाको राष्ट्रमा रही जबरजस्ती भोग गरे । अनि अग्निअगुवा भएका दौताहरूले आफ्ना रक्षकको पत्ता नपाएर ॥२३॥ पापरहित, निष्कलंक, दौताहरूका आचार्य बुद्धिमान् गुरुलाई सोधे, के सोधे भने-हाम्रो मालिक पत्तिखेर

वैशाख
२७०

पप्रच्छुरिन्द्रवृत्तान्तं क्व च तिष्ठति नः प्रभुः ॥२४॥ दैत्याक्रान्तमिदं राष्ट्रं हीननाथं दिवौकसाम् कुतो नायाति देवोऽसौ भूयान्कालो गतो विभो ॥२५॥ तं यामोऽद्यैव धिषण प्रार्थयामश्च तं विभुम् । इति पृष्टस्तदा देवैर्धिषणस्तानुवाच ह ॥२६। रसातले बलिं जित्वा चोतथ्यस्याश्रमं ययौ । भुक्त्वा पत्नीं च धाष्टर्येन तच्छिष्यैरेव निन्दितः ॥२७॥ व्रीडितस्तु दिवं यातुं गुहां मेरोर्विवेश ह । तत्रैवास्ते शचीयुक्तः स्वकृतं चिन्तयन्विभुः ॥२८॥ इति तस्य वचः श्रुत्वा देवा अग्निपुरोगमाः । गुहां मेरोर्ययुः शीघ्रं दृष्ट्वा प्रार्थयितुं विभुम् ॥२९॥ तत्र दृष्ट्वा गुहालीनं

मा०
अ.२३

कहाँ रहनुहुन्छ ? भनी इन्द्रको हाल सोधे ॥२४॥ दौताहरूको स्वामीविनाको यस राष्ट्रलाई दैत्यहरूले ढाकेका छन् । हे प्रभु ! धेरै समय बितिसक्यो तैपनि ती देवेन्द्र के कारणले आइरहेका छैनन् ? ॥२५॥ हे गुरु ! आजै ती-भाउँ जौं र ती मालिकसित प्रार्थना गरौं । यस्ता प्रकारले दौताहरूले अनुनयपूर्वक सोधिएका ती बृहस्पतिले तिनीहरूलाई भने—॥२६॥ रसातलमा गई बलिलाई जितेर उनी उतथ्यको आश्रममा गएका थिए । उहाँ कति रात्री गर्भिणी उतथ्यको पत्नीलाई जबर्जस्ती असंगत भोग गरे र ती उतथ्यका शिष्यहरूले उनी निन्दा गरिए ॥२७॥ त्यसै कुकर्मले स्वर्ग आउन लजाएका उनी मेरुको गुफामा घुसे । आफ्नू खराब कामले पिरिइरहेका इन्द्र शचीका साथ त्यहीं रहन्छन् ॥२८॥ बृहस्पतिको यस्तो कुरो सुनेर अग्नि अगुवा भएका दौताहरू इन्द्रलाई भेटेर बिन्ती बिसाउन तुरुन्तै मेरु पर्वतको गुफामा गए ॥२९॥ त्यहाँ-

देवेन्द्रं पाकशासनम् । तुष्टुवुर्विविधैः स्तोत्रैस्तद्वीर्यैर्लोकविश्रुतैः ॥३०॥ इन्द्रं तुभ्यं नमस्तेऽस्तु सर्वदेवाधिपाय ते । वयं दैत्यैरर्दिताश्च त्वया हीना भृशार्दिताः ॥३१॥ स्थानभ्रष्टाश्चरामोऽङ्ग नानादेशेषु दुःखिता । तस्मादागत्य देवेन्द्र जहि शत्रूनरिन्दम ॥३२॥ इति स्तुतस्तदा देवैर्निश्चक्राम गुहामुखात् । लज्जयाऽवनतो भूत्वा पश्यन् भूमिं च चक्षुषा ॥३३॥ न किञ्चिदपि चोवाच दुःखाद् गद्गदभाषणः । तज्ज्ञात्वा धिषणः प्राह तं सुरेन्द्र भयानतम् ॥३४॥ मा शङ्का ते सुरपते कर्माधीनमिदं जगत् । मानामानौ सुखं दुःखं लाभालाभौ जयाजयौ ।

शासन देवेन्द्रलाई उहाँ गुफामा लुकेको देखेर लोकमा प्रसिद्ध भएका अनेक थरिका उनका पराक्रमका स्तोत्रहरूले प्रार्थना गरे ॥३०॥ हे इन्द्र ! तपाईंलाई नमस्कार छ, सम्पूर्ण देवताहरूका अधिपति तपाईंलाई नमस्कार छ । तपाईंले हीन भएका हामीहरू दैत्यद्वारा दुःखित छौं, अति पीडित छौं ॥३१॥ हे अङ्ग आफ्ना शहरमा घरमा बस्न नपाएर अति दुःखित भै अनेक देशहरूमा भट्किरहेका छौं । हे देवेन्द्र ! हे शत्रुलाई दमन गर्नेवाला ! त्यसकारण आएर शत्रुहरूलाई जित्नुहोस् ॥३२॥ तब यसरी देवताहरूले स्तुति गरिएका इन्द्र लाजले निन्याउरो भएर, घोसेमुण्टो लाएर गुफाको मुखबाट बाहिर निस्के ॥३३॥ दुःखले बोली भकभकिएका इन्द्र ले केही पनि भनेनन् । तब बृहस्पति उनको भाव बुझेर डरले लुगु्वक परेका ती इन्द्रलाई भने– ॥३४॥ हे सुरपति ! तिमीले कुनै किसिमको अप्ठ्यारो मान्नुपर्दैन, यो जगत् संसार





३५॥ पूर्वकर्मानुरोधेन भवन्त्येते न संशयः । जीवः कर्मानुगो दुःखं दिष्टं दैवेन कालतः ।३६। प्राज्ञाः प्राप्य न शोचन्ति न प्रहृष्यन्ति वैसुखात् । तस्मात्प्रारब्धतः प्राप्तं दुःखं चेदं तवप्रभो ॥४७॥ तत्प्राप्य मघवन् दुखं नैव शोचितुमर्हसि । इत्युक्तो गुरुणा चाह मघवानमराधिपान् ॥३८॥ इन्द्र उवाच । परस्त्रीसङ्गदोषेण बलं वीर्ययशोऽमलम् । मन्त्रशक्तिः शस्त्रशक्तिविद्याशक्तिश्च मे हृता ॥३९॥ अभवं नष्टवीर्योऽद्य तूष्णीं तेन वसाम्यहम् । पाकशासनवाक्यान्तु श्रुत्वा स्वाचार्यसंयुताः ॥४०॥

कर्मको अधीन छ । मान-अपमान, सुख-दुख, लाभ-अलाभ, जीत-हार ॥३५॥ यी सबै कुरा पहिलेका कर्मको धकेलपाइले हुन्छन्, यसमा कत्ति फरक पर्दैन । जीवचाहिं कर्मको पछि-पछि चल्छ, समयानुसार दुःख-सुख भाग्यले हुन्छ ॥३६॥ बुद्धिमान्हरू दुःख पर्‍यो भनेर शोक पनि गर्दैनन्, सुखले खुशी भएर उम्लँदा पनि उम्लँदैनन् । त्यसकारण हे प्रभु! तपाईंले यो दुःख प्रारब्धले पाउनुभएको हो ॥३७॥ हे इन्द्र ! त्यसकारण दुःख पर्‍यो भन्दैमा शोक गर्नु ठीक छैन । तब गुरुले यसरी उपदेश गरिएका इन्द्रले देवताहरूलाई भने ॥३८॥ इन्द्र ले भने–अर्काकी स्त्रीमा संगम गरेका दोषले मेरो बल, निर्दोष पराक्रमको यश, मन्त्रशक्ति, शस्त्रशक्ति, विद्याशक्ति सब खतम भए ॥३९॥ अचेल म पराक्रम-हीन भएको छु, त्यसैले गर्दा म चुपचाप बसेको छु । इन्द्रका त्यस्ता कुरा सुनेर आफ्ना गुरुसहित मेला भएका देवताहरूले ॥४०॥ इन्द्रको बल-

मन्त्रयामासुरेकान्ते पुनस्तस्य बलाप्तये । तदा गुरुश्च तान् प्राह करुणं च विदुत्तमः ॥४१॥ बृहस्पतिरुवाच । मासो वैशाखनामाऽयं प्रियो वै मधुघातिनः । सर्वाश्च तिथयः पुण्या मासेऽस्मिन् माधवप्रिये ॥४२॥ तत्रापि च सिते पक्षे तृतीया चाक्षयाह्वमा । यस्तस्यां स्नान-दानादि श्राद्धं चैव करोति वै ॥ ४३ ॥ तस्य पापसहस्राणि नश्यन्त्येव न संशयः । अनवद्यं तथैश्वर्यं बलं धैर्यं भवन्ति च ॥४४॥ तस्मात्तस्यां तृतीयायां हरिणा बलिविद्विषा । स्नानदानादि सद्धर्मान् कारयामो हिताप्तये ॥ ४५ ॥ भविष्यति च सा शक्तिर्विद्यायां मन्त्रशास्त्रयोः । बलं धैर्यं यशश्चैव यथापूर्वं भविष्यति ॥ ४६ ॥ इत्येवं तु विचार्याऽथ गुरुर्देवसमाहितः । इन्द्रेण

प्राप्तिका लागि फेरि एकान्तमा सल्लाह गरे । तब विद्वान्हरूमा श्रेष्ठ बृहस्पतिले तिनीहरूलाई करुण ( दयालु ) कुरा भने ॥४१॥ बृहस्पतिले भने—यो वैशाख नाम गरेको महीना विष्णु भगवान्को प्रिय छ । यस विष्णुप्रिय वैशाख महीनामा सबै तिथिहरू पुण्यदायी छन् ॥४२॥ त्यसमा पनि शुक्लपक्षमा पर्ने अक्षय तृतीया त अति नै पुण्यदायी छ । जो व्यक्ति त्यस तिथिमा स्नान दान आदि कर्म र श्राद्ध गर्दछ ॥४३॥ त्यसका हजारौं पाप भए पनि नाश हुन्छन् । यसमा क्यै शंका छैन । त्यस्तै सबैले प्रशंसा गरिने ऐश्वर्य बल र धैर्य पनि हुन्छन्॥४४॥त्यसकारण, कल्याण पाउन लाउनका लागि त्यस तृतीयाका दिन बलिका द्वेषी इन्द्रद्वारा स्नान दान अनि सद्धर्महरू गराइनुपर्छ ॥४५॥ यति गरेपछि विद्यामा, मन्त्र र शास्त्रमा उही पहिलेकै शक्ति हुनेछ । बल धैर्य यश सबै पहिले जस्तो थियो उस्तै हुनेछ ॥४६॥ अनि धौताहरूका साथ





कारयामास धर्मानेतान् हरिप्रियान् ॥ ४७ ॥ अक्षय्यायां तृतीयायां भुक्तिमुक्तिफलप्रदान् । तेन पूर्ववद्देवासीद्बलं धैर्यादिकं हरेः ॥४८॥ परस्त्रीसङ्गदोषोऽपि सद्य एवं व्यलीयत । पश्चाद्धताशुभः शक्रो राहोर्मुक्त इवोडुपः ॥ ४९ ॥ पश्चाद्देवैः समायुक्तो विनिर्जित्य तथाऽसुरान् । देवताना तथा मध्ये शुशुभे च हरिर्यथा ॥ ५० ॥ तृतीयायाश्च माहात्म्याद्भाग्ययुक्तोऽमरावतीम् । विवेश विभवैःसार्दधं शङ्खतूर्यादिनिःस्वनै ॥५१॥ अनुज्ञाताश्च शक्रेण स्वधामानि ययुः सुराः । ततस्ते यज्ञभागाँश्च लेभिरे च यथा पुरा ॥५२॥ पिण्डभागाँश्च पितरो यथापूर्वंप्रपेदिरे । स्वाध्याये मुनयस्तुष्टा

भेला भएका बृहस्पतिले यस्तो विचार गरेर अक्षय तृतीयाका दिन भुक्ति-मुक्ति दुवै फल दिने,हरिका प्रिय यी धर्महरू इन्द्र द्वारा गराए । त्यस धर्मका प्रभावले इन्द्रका बल धैर्य आदि पहिलेका जस्तै भए ॥४७-४८॥ अर्काकी स्त्रीलाई गमन गरेको दोष पनि तुरुन्तै विलायो । अनि कतै राहुद्वारा चन्द्रमा मुक्त भएझैं इन्द्र पनि पाप नाशिएका भए ॥४९॥त्यसपछि बाद धौताहरूले सहित भएका इन्द्रले दानवहरूलाई जितेर सकल धौधौताका बीचमा रहेका हरि झैं शोभायमान देखिए॥५०॥ अक्षय तृतीयाका महिमाको प्रभावले गर्दा फेरि भाग्यशाली भएका इन्द्रले शंख कर्नाल आदि बाजाका आवाजका साथै सारा ऐश्वर्यहरूले युक्त भएर अमरावतीमा प्रवेश गरे॥५१॥तब इन्द्रको आज्ञा पाएर धौताहरू आफ्नू-आफ्नू धाममा गए । अनि पहिले जस्तै तिनीहरूका यज्ञका भागहरू पनि प्राप्त गरे ॥५२॥ पितृहरूले पिण्ड-पानी पनि पहिले झैं नै पाउन थाले ।

दैत्यानां च पराजयात् ॥५३॥ तदाप्रभृति लोकेऽस्मिन् तृतीया चाक्षयाह्वया । प्रख्याता सर्वलोकेषु देवर्षिपितृतुष्टिदा ॥ ५४ ॥ तस्मात्पुण्यतमा चैषा सर्वकर्मनिकृन्तनी । भुक्तिमुक्तिप्रदा नृणां तृतीया चाक्षयाह्वया ॥५५॥



इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे अक्षय्यतृतीया-
महिमाकथनं नाम त्रयोविंशोऽध्याय ॥२३॥

दैत्यहरूको हारले गर्दा मुनिहरू पनि आ-आफ्नू स्वाध्याय अर्थात् पठन-पाठन आदि कार्य खुशी-साथ गर्न थाले ॥५३॥ त्यसै वेलादेखि यस संसारमा र सारा लोकहरूमा धौंता ऋषि पितृलाई सन्तोष दिने अक्षय नामको तृतीया प्रसिद्ध भएको हो ॥५४॥ त्यसै कारणले सारा दुष्कर्मलाई काट्ने, मनुष्यहरूलाई भुक्ति-मुक्ति दिने यो अक्षय नामको तृतीया अत्यन्त पुण्य तिथि कहिन्छ ॥५५॥



श्री स्कन्दपुराण वैशाख माहात्म्यको नारद र अम्बरीष संवादमा अक्षय तृतीया महिमा कथन नामको
तेइसौं अध्याय सकियो ॥ २३ ॥

---



## चतुर्विंशोऽध्यायः



श्रुतदेव उवाच–तिथिष्वेतासु पुण्यासु द्वादशी सितपक्षगा । वैशाखमासे राजेन्द्र सर्वाघौघविनाशिनी ॥१॥ किं दानैः किं तपोभिश्च किमुपोष्यैर्व्रतैश्च किम् । किमिष्टैश्चैव पूर्तैश्च द्वादशीं यैर्न सेविता ॥२॥ गङ्गायामुपरागे तु यो दद्याद्गोसहस्रकम् । द्वादश्यां माधवे मासि प्राप्नोत्येकगवार्पणात् ॥३॥ गङ्गायां चैव दुर्भिक्षे प्रत्यहं कोटिभोजनात् । तत्फलं समवाप्नोति द्वादश्यामेकभोजनात् ॥४॥ यद्दत्तमर्हते चान्नं द्वादश्यां च सिते शुभे । सिक्थे सिक्थे भवेत्तस्य कोटि-

श्रुतदेवजीले भन्नुभयो—हे राजेन्द्र । यी पुण्य तिथिहरूमा वैशाखमा शुक्लपक्षमा पर्ने द्वादशी तिथि सबै पापसमूहलाई नाश गर्नेवाला छ॥१॥जसले यस द्वादशीको सेवा गरेन अर्थात् यस द्वादशीमा गर्नु पर्ने कृत्यहरू गरेन त्यसले गरेका अरू दानहरूले के हुन्छ, तपस्याहरूले के हुन्छ, उपवास गर्नाले के हुन्छ र व्रतहरू पनि के हुन्छ, कसैको इच्छापूर्ति नै गरेर पनि के हुन्छ, अर्थात् सब बेकारै हुन्छ॥२॥ जसले ग्रहण लागेको वेलामा गंगाकिनारमा एक हजार गाई दान गरेर जो फल पाउँछ त्यो फल वैशाख महीनामा शुक्ल पक्षको द्वादशीमा केवल यौटै गाई दान दिनाले पाउँछ ॥३॥ अनकाल परेको वेलामा गंगाकिनारमा दिनहुँ एक करोड मानिसाई भोजन गराउनाले जो फल पाइन्छ,त्यो फल वैशाख शुक्ल द्वादशीमा केवल एकै जनालाई मात्र भोजन गराउनाले पाइन्छ॥४॥कल्याणकारी वैशाख शुक्लपक्षको द्वादशीमा योग्य व्यक्तिलाईजो

ब्राह्मणभोजनन् ॥५॥ यो दद्यात्तिलपात्रं तु द्वादश्यां मधुसंयुतम् । निर्धूताखिलबन्धस्तु विष्णु-लोकमवाप्नुयात् ॥६॥ एकादश्यां सिते पक्षे कुर्याज्जागरणं हरेः । स जीवन्नेव मुक्तः स्यात्तुष्टाः स्युः सर्वदेवताः ॥७॥ कोटीन्दुसूर्यग्रहणे तीर्थान्याप्लव्य यत्फलम् । तत्फलं समवाप्नोति प्रातः स्नात्वा हरेर्दिने ॥ ८ ॥ तुलस्याः कोमलैः पत्रैर्द्वादश्यां विष्णुमर्चयेत् । स सप्तकुलमुद्धृत्य विष्णुलोके महीयते ॥९॥ द्वादश्यां माधवे मासि यो दद्याद् गां सवत्सकाम् । स कोटिकुलमुद्धृत्य विष्णुलोकाधिपो भवेत् ॥१०॥ यमं पितृन् गुरून् देवान् विष्णुमुद्दिश्य मानवः । माधवे शुक्ल·

सिद्ध अन्न दिइन्छ,त्यस अन्नको सिता-सितामा करोड़ बाहुनलाई भोजन गराए बराबरको फल हुन्छ॥५॥जसले वैशाखशुक्ल द्वादशीमा मह्लिएको तिलले भरिएको भाँडो दिन्छ सारा बन्धनबाट छुटेको त्यो जनले भगवान् विष्णुको लोक पाउँछ ॥६॥ वैशाख शुक्लको एकादशीमा जो जन हरिको कीर्तन गरेर जागरण गर्द छ, त्यो जन बाँच्तैमा पनि मुक्त हुन्छ, त्यसदेखि दौताहरू प्रसन्न रहन्छन् ।७॥ करोडौं चन्द्र-सूर्य ग्रहणमा तीर्थहरूमा डुबुल्की मारेर जो फलपाइन्छ त्योफल वैशाखशुक्ल द्वादशीकोदिन प्रातःस्नान गर्नाले मिल्दछ ॥८॥ वैशाखशुक्ल द्वादशीमा तुलसीका पत्रहरूले भगवान् विष्णुको जो पूजा गर्दछ, त्यो जन आफ्ना सात कुलको उद्धार गरेर विष्णुको लोकमा मजा लिन्छ ॥९॥ वैशाख शुक्लको द्वादशीमा बाच्छी सहित गाई जो दिन्छ, त्यो आफ्ना करोड़ कुलको उद्धार गरेर विष्णुलोकमा सर्वोच्च अधिकारी हुन्छ ॥१०॥ यमराजलाई





द्वादश्यां सोदकुम्भं सदक्षिणम् ॥११॥ दध्यन्नं चैव यो दद्यात्तस्य पुण्यफलं शृणु । प्रयागे प्रत्यहं चैव कुर्याद्यःकोभोजनम् ॥१२॥ यावत्संवत्सरं पुण्यं षड्मासान्नैर्मनोरमैः । तत्फलं समवाप्नोति मधुसूदनशासनात् ॥१३॥ शालिग्रामशिलादानं यः कुर्याद्द्वादशीदिने । वैशाखे शुक्लपक्षे तु सर्वपापैः प्रमुच्यते ॥१४॥ सप्तद्वीपवतीं भूमिं गङ्गायां च रविग्रहे । यो दद्यात्कोटिवारं तु तेन तुल्यं फलं विदुः ॥ १५ ॥ द्वादश्यां पयसा यस्तु स्नापयेन्मधुसूदनम् । राजसूयाश्वमेधाभ्यां यत्फलं परिजायते ॥१६॥ तत्फलं समवाप्नोति तत्स्नायात् नात्र संशयः । त्रयोदश्यां यजेद्विष्णुं

पितृलाई, गुरूलाई, दौतालाई, विष्णुलाई उद्देश्य गरेर जो वैशाखमा शुक्लपक्षको द्वादशीमा दक्षिणासहित जलले भरिएको घड़ा ॥११॥ दही-अन्न पनि जो दान गर्छ, त्यसका पुण्यको फल सुन्नुहोस्–जसले प्रयागमा वर्षभरि नै छवै रसले रसिएका राम्रा अन्नहरूले करोड़ मानिसलाई भोजन गराएर जो पुण्य पाउँछ, मधुसूदन भगवान्‌का आज्ञाले त्यो पुण्य-फल वैशाख शुक्ल द्वादशीमा यमराजलाई उद्देश्य गरेर गरिने दान गर्नाले मिल्दछ ॥१२-१३॥ वैशाख शुक्लको द्वादशीका दिनमा जो जन शालिग्राम-शिला दान गर्दछ, त्यो जन सबै पापबाट छुट्तछ ॥१४॥ सूर्यग्रहण लागेको बेला गङ्गामा गई ॥१५॥ वैशाख शुक्ल द्वादशीमा जसले मधुसूदन भगवान्‌लाई दूधले न्वाहिदिन्छ, त्यसले राजसूय र अश्वमेध यज्ञद्वाराजो फल पाइन्छ॥१६॥ त्यस स्नानद्वारा उही फल पाइन्छ, यसमा संशय छैन । वैशाखशुक्ल त्रयोदशीमा विष्णुको पूजा गर्दा

पयोदधिविमिश्रितैः ॥१७॥ शर्करामधुभिर्द्रव्यैर्मधुसूदनप्रीतये । पञ्चामृतैश्च यो विष्णुं भक्त्या संस्नापयेद्विभुम् ॥१८॥ स सर्वकुलमुद्धृत्य विष्णुलोके महीयते । यो दद्यात् पानकं ह्यस्यां सायान्हे प्रीतये हरेः ॥१९॥ जीर्णपापं जहात्याशु जीर्णं त्वचमिवोरगः । सायान्हे चैव यो दद्यादुर्वारुकरसायनम् ॥२०॥ भवेन्मुक्तः कर्मबन्धादुर्वारुकरसायनात् । इक्षुदण्डं चूतफलं दद्याद्द्राक्षाफलानि च ॥२१॥ न विच्छित्तिः सन्ततेः स्यात्तस्य वै शतपूरुषम् । यो दद्याद्गन्धलेपन्तु सायान्हे द्वादशीदिने ॥२२॥ बाह्योपघातैः सकलैर्मुच्यते नात्र संशयः । यत्किञ्चित्कुरुते पुण्यं

दूध-दही मिसिएका ॥१७॥ चीनी मह घिउ नै वस्तु भएका पञ्चामृतलेमधुसूदनभगवान्‌को खुशीका लागि विष्णु विष्णुलाई जो भक्तिपूर्वक न्वाहिदिन्छ ॥१८॥ त्यो जन सबै जनको उद्धार गरेर विष्णुलोकमा रमाउँछ। जसले यस त्रयोदशीमा साँझपख हरिको प्रीतिको लागि शरबत दान दिन्छ ॥१९॥ सर्पले पुरानू छाला ( काँचुली ) फाले झैं उसले पुराना पापलाई तुरुन्तै त्याग्दछ । जसले त्यस त्रयोदशीको साँझमा रसिला ककडी दाना दिन्छ ॥२०॥ त्यो जन ककडीका रसका प्रभावले संसारका कर्मरूपी बन्धनबाट मुक्त हुन्छ । जो यस त्रयोदशीमा उखुको लाँका,आपकोफल, दाखका दानादान गर्छ॥२१॥ त्यसका सय पुस्तासम्म सन्तानको चुँडाई हुँदैन, अर्थात् सय पुस्तासम्मका सन्तानमा निःसन्तान कोही हुँदैन । जसले वैशाख शुक्ल द्वादशीका दिन साँझमा चन्दन र सुगन्धित वस्तु दान दिन्छ ॥२२॥ त्यो दाता सम्पूर्ण बाहिरी उपद्रव-





द्वादश्यां राजसत्तम ॥२३॥ माधवे तु सिते पक्षे तदक्षय्यफलं भवेत् । प्रख्यातिमस्यां वक्ष्यामि केन जातेति भूमिप ॥२४॥ श्रवणात्सर्वपापघ्नी सर्वमङ्गलदायिनी । पुरा काश्मीरदेशे तु द्विजो देवव्रताह्वयः ॥२५॥ तस्यासीन्मालिनी नाम तनया पापरूपिणी । ददौ तां सत्यशीलाय विप्रवर्याय धीमते ॥२६॥ तां गृहीत्वा ययौ धीमान् स्वदेशं यवनाह्वयम् । रूपयौवनसम्पन्ना तस्या नैव प्रियाऽभवत् ॥२७॥ सदा विद्वेषसंयुक्तस्तस्यां तिष्ठति निष्ठुरः । नान्यस्य कस्यचिद्द्वेषी तां विना नृपते पतिः ॥२८॥ तस्मिन् सा क्रोधसंयुक्ता वशीकरणलम्पटा । आपृच्छत्प्रमदा

हरूबाट छुट्तछ, यसमा शंका छैन । हे श्रेष्ठ राजा ! वैशाख शुक्लपक्षका द्वादशीमा जो कुछ पुण्य गरिन्छ ॥२३॥ त्यो अक्षय्य फल दिनेवाला हुन्छ । हे राजन् ! यस द्वादशीको प्रसिद्धि क-कसबाट भयो, त्यो म भन्छु–॥२४॥ जुन कथा सुनाले सबै पाप नाश गर्ने र सारा मंगललाई दिनेवाला छ । उहीले कुनै समयमा कश्मीर देशमा देवव्रत नामको ब्राह्मण रहन्थ्यो ॥२५॥ त्यसकी मालिनी नामक पापरूपी छोरी थिई । असल शील स्वभाव भएको, बुद्धिमान्, श्रेष्ठ ब्राह्मणलाई त्यो कन्या उसले दियो ॥२६॥ उसलाई लिएर त्यो बुद्धिमान् यवन नामको आफ्नू देशमा गयो ॥ रूप यौवनले उज्ज्वल भएकी त्यो मालिनी त्यस ब्राह्मणको प्रेयसी हुन सकिनँ ॥२७॥ त्यो बाहुन त्यस स्त्रीउपर सधैं टक्याक-टुटुक गर्ने [illegible] भएर रहन्थ्यो । हे राजन ! त्यो पति उसलाई छाडेर अरू कसैको पनि द्वेष गर्दैनथियो ॥२८॥ [illegible]

राजन् यास्त्यक्ताः पतिभिः पुरा ॥२९॥ ताभिरुक्ता तु सा भूप वश्यो भर्ता भविष्यति । अस्माकं प्रत्ययो जातो भर्तृत्यागावमाननात् ॥३०॥ प्रयुज्य भेषजं वश्य नीता हि पतयः पुरा । योगिनी त्वं तु गच्छाद्य दास्यते भेषजं शुभम् ॥३१॥ न विकल्पस्त्वया कार्यो भविता दासवत्पतिः । योगिनीमन्दिरं गत्वा तासां वाक्येन भूपते ॥३२॥ प्रसादमतुलं तस्या लेभे दुश्चारिणी सती शतस्तम्भसमायुक्तां कुटीं भेजे त्वरान्विता ॥३३॥ सुविस्तृतां सुवर्चस्कां तथैवायतयामिकाम् । शावृतां दीर्घवस्त्रेण सुधालेपेन वर्तिताम् ॥३४॥ दीर्घाभिश्च सटाभिस्तु प्रावृता दीप्तिसंयुता ।

रन्किएकी, यसैकारण वशीकरणमा लागिपरेकी त्यस मालिनीले हे राजन् ! पहिले-पहिले पतिहरूले जो त्यागिएका थिए, ती स्वोहरूलाई सोध्री ॥२९॥ हे राजन् ! उनीहरूले उपलाई लोग्ने वशमा अवश्य हुन सक्छ भने । लोग्नेले त्यागेका अपमानले हामीहरूलाई यो विश्वास भैसकेको छ ॥३०॥ हामीले पहिल्यै पतिहरूलाई औषधी प्रयोग गरेर वशमा पारिसकेका छौं । तिमी आजै योगिनीभाठौं जौ । त्यो बढिया औखती दिन्छे ॥३१॥ तिमीले शंका गर्नै पर्दैन, लोग्ने त नोकर जस्तो भैजानेछ हे राजन् ! तिनीहरू काकुराले उ पनि योगिनीको कुटीमा गए ॥३२॥ त्यस खराब चरित्र भएकी स्वास्नीले उस योगिनीबाट प्रशस्त प्रसादी पाई पनि । तिनीहरूको कुरो सुन्नेबित्तिकै हतारिएकी ऊ सयवटा खम्बा गाडिएको, फराकिलो, असाद्ध सफा सुग्घर, लम्बाई-चौडाई बराबर भएक लामु लुगाल घेरिएको, चूनाको लेपले पोतिएको कुटीमा पुगी ।३३-३४। लामा लामा जटा बढाएकी, अत्यन्त चहकिली, सेवैतेहरूले सेविइरहेको, बिस्तारै-बिस्तारै यता-उति




परिचारसमोपेता वीक्षमाक्षा शनैः शनैः ॥३५॥ अक्षसूत्रकरा सा तु जपन्ती प्रार्थिता तया । ददौ वश्यकरं मन्त्रं क्षोभकं प्रत्ययान्वितम् ॥३६॥ ततः सा प्रणता भूत्वा पद्भ्यां दत्त्वाऽङ्गुलीयकम् । वज्रमाणिक्यसंयुक्तमतिरिक्तप्रभान्वितम् ॥३७॥ मृदुकाञ्चनसंयुक्तं भानुरश्मिसमद्युति । ततो दृष्ट्वा तु सन्तुष्टा पादस्थं चाङ्गुलीयकम् ॥३८॥ हृदयं च तया ज्ञातं तत्पतेरवमानजम् । तदोक्ता हि तया भूप तापस्य हितयुक्तया ॥३९॥ चूर्णो रक्षान्वितो ह्येष सर्वभूतवशङ्करः । चूर्णं भर्तरि संयुज्य रक्षां ग्रीवाश्रयां कुरु ॥४०॥ भविष्यति पतिर्वश्यो नान्यां यास्यति सुन्दरि ।

हेरिरहेकी ॥३५॥ हातमा रुद्राक्षको माला लिएर जपिरहेकी, उहाँ पुगेकी मालिनीले विनयपूर्वक प्रार्थना गरिएकी उसले विश्वास परिसकेको अर्थात् कतिपल्ट परीक्षा गरेर उसमा सफल भैसकेको, 'क्षोभक' नामको वशमा गर्ने मन्त्र उस मालिनीलाई बताइदिई ॥३६॥ तब उसले हीरा मणि जडिएको, चमचम चम्किरहेको, आफुले दुवै गोडामा पैरिराखेको औंठी दिंदै ढोगिदिई ॥३७॥ तब मुलायम सुनले बनाइएको, सूर्यको किरणझैं चम्किएको, उसले आफ्नु गुरुको गोडामा चढाइएकोऔंठी देखेर योगिनी खुशी भइन् ॥३८॥ र उनले उसको पतिद्वारा अपमानित भएको हृदयलाई पनि जानिन् । हे राजन् ! हित चाहने ती योगिनीले मालिनीलाई भनिन्– ॥३९॥ सारा प्राणीलाई वश पार्ने यो चूर्णरक्षा हो । यो चूर्ण पानीमा मिलाएर पतिलाई यो चूर्ण ख्वाएर किलकिलेमा समाई रक्षा गरे अर्थात चूर्ण उगेल्न नपाओस यस्तो काम गरे ॥४०॥

नाप्रियं वदति क्वापि दुश्चारिण्यास्तवापि च ॥ ४१ ॥ चूर्णरक्षां गृहीत्वा सा प्राप्ता भर्तृगृहं पुनः
प्रदोषे पयसा युक्तश्चूर्णो भर्तरि योजितः ॥ ४२ ॥ ग्रीवायां हि कृता रक्षा न विचारः कृतस्तया ।
सदा स पीतचूर्णस्तु भर्ता नृपवरोत्तम ॥ ४४ ॥ तच्चूर्णात्क्षयरोगोऽभूत्पतिः क्षीणो दिने दिने ।
गुह्ये तु कृमयो जाता घोरा दुष्टव्रणोद्भवाः ॥४४॥ दिनैः कतिपयैः राजन् पत्यावेवं व्यवस्थिते ।
उवास स्वेच्छया सापि पुंश्चली दुष्टचारिणी ॥ ४५ ॥ हततेजास्ततो भर्ता तामुवाचाकुलेन्द्रियः ।
क्रन्दमानो दिवारात्रं दासोऽस्मि तव शोभने॥४६॥ त्राहि मां शरणं प्राप्तं न कांक्षेयं परश्रियम् ।

यति गऱ्यौ भने तिम्रो पति वशमा हुनेछ, हे सुन्दरी ! अरूमाठौं जानेछैन र तिमी दुष्ट चरित्र भए पनि तिमीलाई कहिल्यै अप्रिय कुरो भन्ने छैन॥४१॥योगिनीले दिएको चूर्णरक्षा लिएर त्यो फेरि पतिको घर पुगी बेलुका चूर्णलाई दूधमा न्यालेर लोग्नेलाई पियाइदी॥४२॥पिउँदाखेरि उसले कुनै विचारै नगरी निर्दयी भएर च्याप्प घाँटीमा समाती हे राजाहरूमा श्रेष्ठ राजा तब त्यस पतिले त्यो चूर्ण घुट्टक निल्यो ॥४३॥ त्यस चूर्णले गर्दा क्षयरोग भयो, पति दिनदिनै दुब्लाउँ दै गयो । त्यसको गुदद्वारमा नराम्रो घाउ भएर उसमा उब्जिएका डरलाग्दा कीराहरू स्याउँ स्याउँती भए ॥४४॥ हे राजन् ! कति दिनसम्म लोग्ने यस्तो हालतमा रहँदाखेरि त्यो दुष्ट चरित्रवाली फुँडी पनि मनमानी भएर रहन लागी ॥४५॥ तब बल घटेको, आकुल इन्द्रियवाला. रात-दिन चिच्याइरहने उस पतिले 'हे सुन्दरी ! म तिम्रो दास हुँ'शरणमा परेको मलाई रक्षा





तत्तस्य क्रन्दितं श्रुत्वा भीता सा मेदिनीपते ॥ ४७ ॥ अलङ्कारकृते पत्युर्जीवनेच्छुश्च वै तदा ।
योगिनीं च ययौ शीघ्रं तस्यै सर्वं न्यवेदयत् ॥ ४८ ॥ तया च भैषजं दत्तं द्वितीयं दाहशान्त्य ।
दत्ते च भेषजे तस्मिन् स्वस्थोऽभूत्तत्क्षणात्पतिः ॥४९॥ पूर्णचूर्णोद्भवो दाहः शान्तस्तस्याभवत्तदा ।
ततः प्रभृति भर्ता च वश्योऽभूद्वेश्मसंस्थितः ॥५०॥ तिष्ठत्युपपतिर्गेहे गृहकृत्यापदेशत । सर्ववर्ण
समुद्भुता जारास्तिष्ठन्ति वै गृहे ॥ ५१ ॥ न किञ्चिद्वचने शक्तिर्भर्तुर्जाता कथञ्चन । ततस्तेनैव
दोषेण सर्वाङ्गेषु च जज्ञिरे ॥ ५२ ॥ कृमयश्चास्थिभेत्तारः कालान्तकयमोपमाः । तैर्नासाहिद्व·

गर, अब उप्रान्त म परस्त्री चाहन्नँ, भनी उस स्त्रीलाई भन्यो । हे राजन् ! त्यसको त्यो चिच्याइ सुनेर त्या स्त्री पनि डराई ॥ ४६-४७ ॥ शृङ्गार-पटारका लागि पनि पतिको जीवन चाहनेवाली त्यो त्यसै चाँडै नै योगिनीमाठौं गई र ती योगिनीलाई सबै कुरो निवेदन गरी ॥४८॥ योगिनीले पनि दाहशान्तिका लागि अर्को औषधि दिइन् । त्यो औषधि दिने (खुवाउने) बितिकै उसै क्षणमा उसको पति स्वस्थ ( निरोग ) भयो ॥ ४९ ॥ पहिले चूर्ण खाएर उसको दाह अब शान्त भएको थियो । त्यहाँदेखि त्यसको पति घरै बसिरहने उसको वशको भयो ॥ ५० ॥ घरको काम गर्ने बहानाले रखौटो पनि घरमै रहन्थ्यो । अरू सबै वर्णका जार पनि एक एक निहुँले उसको घरमै रहन्थे ॥५१॥बिचरा लोग्नेको कुनै हालतमा पनि क्यै बोल्ने शक्ति भएन । त्यसका बाद त्यसै पापका दोषले त्यस राँडका सबै अङ्गहरूमा प्राणै चुड्ने काल यमराज जस्ता हड्डी नै छेड्ने कीराहरू उब्जिए । ती कीराहरूले त्यसका नाक र जिब्रोमा

योश्चासीच्छेदः कर्णद्वयस्य च ॥ ५३ ॥ स्तनयोश्नाङ्गुलीनां सा पङ्गुत्वमपि चागतम् । तेन पञ्चत्वमापन्ना गता नरकयातनाम् ॥ ५४ ॥ ताम्रखण्डे च सा दग्धा युगानां शतपञ्चकम् । श्वानयोनिषु सञ्जाता शतवारं पुनः पुनः ॥५५॥ सूक्ष्माणि तृणतन्त्राणि कृत्वा खण्डान्यनेकशः । भक्ष्यमाणा निराहारा रुदती स्वेन कर्मणा ॥ ५६ ॥ छिन्ननासा छिन्नकर्णा कृमिमूर्धा निरन्तरम् । छिन्नपुच्छा भग्नपादा ताडिता च गृहे-गृहे ॥ ५७ ॥ पश्चात्सौवीरदेशेषु पञ्चबन्धोर्द्विजस्य च दास्या गृहे शुनी जाता बहुदुःखसमाकुल ॥ ५८ ॥ छिन्नकर्णा छिन्ननासा छिन्नपुच्छांघ्रिरातुरा ।

दुवै कानमा पनि प्वाल पारिदिए॥५२५३॥दुवै स्तनमा पनि छिया-छिया पारिदिए, औंलाहरू पनि हुँडा पारिदिए, तब त्यो लँगडी पनि भई । त्यसै दुःखले मरेकी त्यो नरकका यातना भोग्न गई॥५४॥र पाँच सय युगसम्म त्यो पापिनी तामाका भाँडामा भुटुई । त्यसपछि बारम्बार पटकैपिच्छे सयपल्टसम्म कुकुर्नीको योनिमा जन्मलिई॥५५॥त्यस योनिमा मसिना तृण-का त्यान्द्राहरूलाई अनेक टुक्रा पारेर खान्थी । आफ्ना कर्मले खान नपाई डाँको छाडेर क्वाँ-क्वाँ रुन्थी॥५६॥नाक झरेकी, कान झरेकी, सदैव टाउकामा कीरा परेकी, पुच्छरले हीन, गोडा भाँच्चिएकी, घर-घरमा पिटाइ खाने त्यो ॥५७॥ पछि फेरि सौवीर देशमा पञ्चबन्धु बाहुनका दासीको घरमा धेरै दुःखले आकुल कुकुर्नी भई जन्मी ॥५८॥ त्यस जन्ममा पनि कान खसेकी, नाक झरेकी, पुच्छरले हीन, गोडा भाँच्चिएकीले पीडित रहेकी, टाउकाभरि कीरैकीरा





कृमिपूर्णशिरा नित्यं कृमियोनिश्च तिष्ठति ॥५९॥ एवं त्रिंशद्गता वर्षा तस्मिन् जन्मनि भूमिप । दैवात्कर्मविपाकेन वैशाखे मेषगे रवौ ॥ ६० ॥ शुक्लपक्षे तु द्वादश्यां पञ्चबन्धोस्तनूद्भवः । नद्यां स्नात्वा शुचिर्भूत्वा सार्द्रवस्त्री गृहं ययौ ॥ ६१ ॥ तुलसीवेदिकां प्राप्य पादावनिनेजनम् । वेदिकाया अधो देशे सा शुनी स्वापमागता ॥ ६२ ॥ प्राक्सूर्योदयवेलायां पादोदकपरिप्लुता सद्यो ध्वस्तताऽशुभा जाता जातिस्मृतिरभूत्क्षणात्॥६३॥स्मृत्वा कर्मकृतं पूर्वं सा शुनी तापसंत्रदा चुक्रोश करुण दीना मुने त्राहीति वै पुनः॥६४॥स्वकर्म च मुनीन्द्राय स्मृत्वाऽऽचख्यौ भयाकुला ।

भरिएकी, सधैं योनिमा पनि स्याउँ-स्याउँती कीरा परेकी भएर रहन्थी ॥५९॥ हे राजन् ! उस जन्ममा यस्तै दुःख पाएर उसका तीस वर्ष बिते । कर्मको फल पूरा भोगिसकेकाले दैववश मेष राशिमा सूर्य गएको वैशाख महीनामा ॥६०॥ शुक्ल-पक्षको द्वादशीमा पञ्चबन्धुका छोरा नदीमा न्वाहेर पवित्र भई चिसै लुगाले घर आए ॥६१॥ र तुलसी मठको चौतारामा-पुगे दुवै गोडा धोए । त्यही चौताराको तल त्यो कुकुर्नी सुतिरहेकी थिई॥६२॥सूर्योदयभन्दा क्यै पहिलेको बेलामा ब्राह्मणका चरणोदकले न्वाहिएकीले तुरुन्तै उ पाप रहित भई र उसै क्षण उसलाई जातिस्मृति पनि भयो ॥६३॥ पहिले गरेका पाप कर्म सम्झेर तब त्यस कुकुर्नीले ती तपस्वीलाई 'हे मुनि ! रक्षा गर्नुहोस्, रक्षा गर्नुहोस्, भन्दै बार-बार करुण वचनले रुन कराउन लागी ॥६४॥ डरले आकुल भएकी उसले–लोग्नेलाई विष दिएको र त्यस्तै आफ्ना खराब चरित्र

भर्तुर्विषप्रयोगन्तु स्वस्य दुश्चरितं तथा ॥ ६५ ॥ योऽन्यापि युवतिर् ब्रह्मन् भर्तुर्वश्यं समाचरेत् ।
वृथाधर्मा दुराचारा पच्यते ताम्रभाजने ॥ ६६ ॥ भर्ता नाथो गुरुर्भर्ता भर्ता दैवतमुत्तमम् ।
विप्रियं तस्य कृत्वा स्त्री कथं सुखमवाप्नुयात् ॥६७॥ तिर्यग्योनिशतं याति कृमिकोटिशतानि च
तस्माद्भूसुर कर्तव्यं स्त्रीभिर्भर्तुर्वचः सदा ॥६८॥ साहं यास्ये पुनर्योनिं कुत्सितां यातनान्वितान् ।
यदि नोद्धरसे ब्रह्मन्नद्य त्वद्दृष्टिसंमुखाम् ॥६९॥ तस्मादुद्धर मां ब्रह्मन् दुष्कृतां पापचारिणीम् ।
सुकृतस्य प्रदानेन वैशाखे शुक्लपक्षके ॥ ७० ॥ योपासिता त्वया ब्रह्मन् द्वादशी पुण्यवर्द्धिनी ।

हरू सबै संझेर आफ्ना नीचकर्म मुनिलाई बताई ।६५। हे ब्रह्मन् ! अरू पनि जो जो युवती टुनामुना,मन्त्र-तन्त्र, औषधिले लोग्नेलाई वश गर्दछे, धर्म नासिएकी दुष्ट आचरण त्यो नरकयातना भोग्दा तामाको भाँडामा पकाइन्छे, पिल्स्याइन्छे ॥६६॥नारीका लागि पति नै मालिक हुन्,पति नै गुरु हुन् पति नै उत्तम देवता हुन् । उनको मन नपर्ने काम गरेर स्त्री कसरी सुख पाउली ॥६७॥ पतिद्रोहिणी स्त्रीहरू सय जन्मसम्म पशुयोनिमा एक अरब जन्मसम्म कीरा भएर जन्मन्छन् त्यसकारण हे ब्रह्मन् ! स्त्रीहरूले सधैंभरि पतिको आज्ञा पालन गर्नुपर्छ ॥ ६८ ॥ आज तपाईका आँखाको समाने परेकी मलाई यदि तपाई उद्धार गर्नुहुन्न भने उहीं पतिद्रोहिणी म फेरि दुःखैदुःखले भरिएको नीच योनिमा जन्मनेछु ॥६९॥ अतः हे ब्रह्मन् ! वैशाखको शुक्लपक्षमा गरिएका असल कामको पुण्य दिएर खराब काम गरेकी, पापिनी मेरो उद्धार गर्नुहोस् ॥७०॥ हे ब्रह्मन् ! पुण्य बढाउने द्वादशी जो तपाईंले उपासना गरिएको छ,त्यसमा स्नान, दान; भवको

---





तस्यां त्वया कृतं पुण्यं स्नानदानान्नभोजनैः॥७१॥दुश्चारिण्या अपि ब्रह्मन् तेन मुक्तिर्भविष्यति ।
यस्यां तु भूसुर स्नातः स्वगृहे मनुजः किल ॥७२॥ सर्वतीर्थफलावाप्तिं लभते नात्र संशयः ।
तप्तं जप्तं हुतं दत्तं कृतं देवार्चनादि यत् ॥ ७३ ॥ तदक्षय्यफलं ज्ञेयं यत्कृतं द्वादशीदिने ।
एवं विधं फलं यत्स्यात्तद्देहि सकलं मम ॥ ७४ ॥ द्वादश्यामुपवासेन त्रयोदश्यां तु पारणात् ।
यत्फलं स्यात्तदप्यद्धा तेन मुक्तिर्भविष्यति ॥ ७५ ॥ दयां कुरु महाभाग दीनायां दीनवत्सल ।
दीननाथो जगन्नाथो युष्मन्नाथो जनार्दनः ॥७६॥ यदीयास्तादृशा एवं यथा राजा तथा प्रजाः ।

भोजन (खान-पान) द्वारा तपाईले गरिएको पुण्य ॥७१॥ मलाई दिनुभो भने हे ब्रह्मन् ! त्यस पुण्यले खराब चरित्रवाली पनि मेरो मुक्ति हुनेछ । हे बाहुनबाजे ! यस द्वादशीमा आफ्नै घरमा न्वाहुने मनुष्यले पनि निश्चये ॥७२॥ सबै तीर्थमा न्वाहेको फल पाउंछ, यसमा कुनै संशय छैन । तप, जप, हवन, दान, देवताहरूको पूजा-पाठ आदि कर्म ॥७३॥ वैशाख शुक्ल द्वादशीका दिन जो गरिएको छ त्यो अक्षयफल दिनेवाला हुन्छ भनी जान्नुपर्छ । यस्ता प्रकारको जो पुण्यरूपी छ त्यो सबै मलाई दिनुहोस् ॥७४॥वैशाख शुक्ल द्वादशीमा उपवास बसेर भोलिपल्ट त्रयोदशीमा पारण गर्नाले फल मिल्छ त्यसले पनि पक्कै मुक्ति हुन्छ ॥७५॥ हे भाग्यमानी ! हे दुःखीहरूमा दया गर्ने ! म दुःखिनीमा पनि दया गर्नुहोस् । दुःखीहरूका स्वामी,जगत्का मालिक,जनार्दन भगवान् तपाईंका पनि नाथ हुनुहुन्छ ॥७६॥ 'जस्ता राजा उस्तै प्रजा' भनेझैं

वैवस्वतपदध्वंसिन्परित्राहि सुदुःखिताम् ॥७७॥ त्वाद्द्वारवासिनीं दीनां शुनीं मां दीनवत्सम । ब्रह्महत्यासहस्रं वा गोहत्यानां सहस्रकम् ॥७८॥ अगम्यानां च कोट्यश्च दहत्येषा शुभा तिथि । तस्यां कृतं महापुण्यं मह्यं दत्त्वा महामुने ॥ ७९ ॥ मामुद्धर समुद्विग्नां दीनां नाथ दयां कुरु । अन्ते तुभ्यं द्विजेन्द्राय मम उक्तिं विधेमहि ॥८०॥ इति तस्या वचः श्रुत्वा शुनीमाह मुनेः सुतः । स्वकृतं जन्तवोऽश्नन्ति सुखदुःखात्मकं शुनि ॥ ८१ ॥ यस्मात् किमु त्वया कार्यं क्षुद्रया पापशीलया । यया भर्ता वशं नीतो रक्षाचूर्णादिभिर्वृतः ॥८२॥ साधुभ्यो यत्कृतं पापं स्वस्य

भगवान्का भक्त पनि भगवान् जस्तै हुन्छन् । हे दीनवत्सल ! हे वैवस्वत पदलाई ध्वंस गर्नेवाला ! तपाईंको द्वारमा बस्ने अत्यन्त दुःखिनी, लुश्री म कुचिनालाई रक्षा गर्नुहोस् । किनकि हजारौं ब्रह्महत्यालाई, हजारौं गोहत्या र ॥७७॥ करोडौं अगम्य प.पहरूलाई पनि यो शुभ तिथि डढाइदिन्छ त्यसकारण हे महामुनि ! तपाईंले त्यसमा गरिएको महापुण्य मलाई दिएर ॥७९॥ हे नाथ ! अत्यन्त दुःखिनी अति लुश्री मलाई उद्धार गरिदिनुहोस् । दया गर्नुहोस् । अन्तमा श्रेष्ठ ब्राह्मण तपाईंलाई म नमस्कार गर्दछु॥८०॥त्यस कुकुर्नीको यस किसिमको कुरा सुनेर मुनिका पुत्रले कुकुर्नीलाई भने–हे कुकुर्नी ! प्राणीहरू सुख या दुःख मिल्ने आफूले गरेको कर्म भोग्छन् ॥८१॥ रक्षाचूर्ण आदिले विवश पारेर जुन नीच पापिनी तैंले लोग्नेलाई वशमा पारिस् त्योभन्दा ठूलो पाप तैंले अरू के गरिन सक्छ ? अर्थात् यो भन्दा ठूलो पाप हुनै सक्दैन ॥८२ सज्जनहरूको उपर जो पाप गरिन्छ त्यो आफैंलाई दुःख दिने हुन्छ, सज्जनका उपर जो पुण्य कार्य गरिन्छ त्यो आफ्नो

---





दुःखकरं भवेत् । साधुभ्यो यत्कृतं पुण्यं स्वस्य दुःखहरं भवेत् ॥८३॥ उभयभ्रंशतामेति पापेभ्यो यत्कृतं भवेते । शर्करामिश्रितं क्षीरं कोद्रवेयनिवेदितम् ॥८४॥विषवृद्धिकरं दुष्टमेवं पापकृतं भवेत् । वदत्येव मुनिसुते शुनी दुःखेन दूषिता ॥ ८५ ॥ पुनश्चुक्रोशोर्ध्वमुखी तत्पित्रे बहुभाषिणी । पद्मबन्धो परित्राहि शुनीं त्वद्द्वारवासिनीम् ॥८६॥ त्वदुच्छिष्टाशिनी नित्यं त्वं पाहीति पुनःपुनः । स्वपोष्या ये हि वर्तन्ते गृहस्थस्य महात्मनः ॥ ८७ ॥ तेषामुद्धरणं कार्यमिति धर्मविदां मतम् । चाण्डाला वायसाश्चैव सारमेयाश्च नित्यशः ॥८७॥ गृहस्थानां दयापात्रं प्रत्यहं बलिभोजिनः ।

दुःख हर्ने हुन्छ ॥८३॥ तर पापीहरूका लागि जो कार्य गरिन्छ, त्यसले दुवैलाई खतम पार्छ, जस्तै चीनी मिलाएको दूध सर्पलाई दियो भने ॥८४॥ विष बढाउने हुन्छ, त्यस्तै पापी दुष्टका उपर गरिएको उपकार पनि हानिकारक हुन्छ । मुनिका छोराले यति भनेपछि दुःखले पीडित कुकुर्नीले ॥८५॥ उनका बाबुलाई धेरै कुरा भन्दै माथितिर मुख फर्काएर फेरि ऊ कराउन थाली–हे पद्मबन्धु ! तपाईंको द्वारमा बस्ने कुकुर्नीको रक्षा गर्नुहोस् ॥ ८६ ॥ म सधैं तपाईंको जूठो खाने हुँ, तपाई मेरो रक्षा गर्नुहोस् भनी बारम्बार कराई । गृहस्थी महात्माको घरमा जो आफूले पोसेका प्राणी रहन्छन् ॥८७॥ तिनीको उद्धार उनीहरूल गर्नुपर्छ भन्ने धर्म जान्नेहरूको मत छ, रोजै बलि (पन्साएको भाग) खाएर जीवन धान्ने चाण्डालहरू, कागहरू, कुकुरहरू सधैं गृहस्थीहरूका दयाका पात्र हुन् । जो गृहस्थी रोग, घाउ, चोटपटक लागेको अशक्त हलचल गर्न नसक्ने आफूले पालिएको प्राणीलाई उद्धार गर्दैन भने त्यो गृहस्थी नरकमा जान्छ, यसमा

अशक्तं नोद्धरेत्पोष्यं रोगाद्युपहतं यदि । सोऽधः पतेन्न सन्देह इति वेदविदां मतम् ॥८९॥ कर्तारमेकं जगतां हि कर्ता कृत्वाऽत्मना पाति समस्तजन्तून् । दारादिरूपव्यपदेशतो हरिस्तस्मात्तदाज्ञा खलु पोष्यरक्षा ॥९०॥ तां पोष्यरक्षां परिहृत्य जन्तुर्दैवेन क्लृप्तां यदि वर्ततेऽन्यधीः । स एव दोषभ्रात् सकलस्य हन्ता कीनाशलोकं नितरां प्रयाति ॥९१॥ कर्त्तव्यत्वाद्दयालुत्वाद्दीनामुद्धर दुर्मतिम् । इति तस्या वचः श्रुत्वा दुःखार्ताया गृहे स्थितः । निश्चक्राम गृहात्तूर्णं पद्मबन्धुर्दयानिधिः ॥९२॥ किमेतदिति तां प्राह पुत्रः सर्वं न्यवेदयत् । स तु पुत्रवचः श्रुत्वा तमेवं प्राह विस्मितः ॥९३॥ पद्मबन्धुरुवाच । ममात्मज कथं वाक्यमीदृशं व्याहृतं त्वया । न साधूनामिदं

कुनै सन्देह छैन भन्ने वेद जान्नेको मत छ ॥८८-८९॥ जगत्का कर्ता हरि समस्त प्राणीहरूलाई स्त्री आदि परिवाररूपको बहानाले आफैले सिर्जिएको ठानेर आफै रक्षा गर्छन्, त्यसकारण आफूले पालेकाको रक्षा गर्नु हरिको आज्ञा नै हो॥९०॥ आफूले पालेकोलाई रक्षा गर्नुपर्छ भन्ने हरिले खटाएको त्यस आज्ञालाई त्यागेर यदि कोही विपरीत बुद्धिको हुन्छ भने त्यो नै सबैलाई मार्नेवाला हो र त्यसै पापले गर्दा आखिर नरकमा जान्छ ॥९१॥ कर्तव्य ठानेर अथवा दयालु भएर दुष्ट-बुद्धिको भलाई उद्धार गर्नुहोस् । दुःखले पीडित त्यस कुकुर्नीको त्यस्तो कुरो सुनेर घरभित्र बसेका दयाका खानि पद्मबन्धु तुरुन्तै घरबाट बाहिर निस्के ॥९२॥ र किन यस्तो कराएकी भनी कुकुर्नीलाई भने, तब उनका छोराले सबै निवेदन गरे । तब पद्मबन्धुले छोराको कुरो सुनेर आश्चर्य मै उनलाई यस्तो भने— ॥९३॥ पद्मबन्धुले भने—ए मेरो ! यस्तो कुरो तैंले





वाक्यं भवतीह च पावनम् ॥९४॥ आत्मसौख्यकराः पापा भवन्ति परिभाविताः । पश्य पुत्र जनाः सर्वे परोपकरणाय वै ॥९५॥ शशी सूर्योऽथ पवनो मेदिनी हुतभुग्जलम् । चन्दनं पादपाः सन्तः परोपकरणे स्थिताः ॥९६॥ अस्थिदानं कृतं पुत्र कृपया हि दधीचिना । देवानामुपकाराय ज्ञात्वा दैत्यान् महाबलान् ॥९७॥ कपोतार्थे स्वमांसानि शिबिना भूभुजा पुरा । प्रदत्तानि महाभाग श्येनाय क्षुधिताय वै ॥९८॥ जीमूतवाहनो राजा पुराऽऽसीत्क्षितिमण्डले । तेनापि जीवितं दत्तं गरुडाय महात्मने ॥९९॥ तस्माद्दयालुना भाव्यं भूसुरेण विपश्चिता । शुद्धे वर्षति देवस्तु किमशुद्धे न वर्षति ॥ १०० ॥ किन्न दीपयते चन्द्रश्चाण्डालानां गृहेऽशुभे ।

कसरी भनिस् ? सज्जनहरूले यस्तो कुरो बोल्नु राम्रो हुँदैन ॥९४॥ आफूलाई सुख हुने कुरा मात्र गर्ने मतलबी पापीहरू निन्दित हुन्छन् । हे छोरा ! हेर, धेरै मानिसहरू परोपकारका लागि नै बाँचेका छन् ॥९५॥ चन्द्रमा, सूर्य अनि बतास, पृथ्वी, आगो पानी, चन्दन, रूख, सज्जन यी सब परोपकारमै लागिरहेकाछन् ॥९६॥ हे पुत्र ! दैत्यहरूलाई अतिबलिया ठानेर देवताहरूको उपकारका लागि दधीचि ऋषिले आफ्नै हड्डी नै दान गरे ॥९७॥ हे भाग्यमानी पुत्र ! उहिले शिबि नामका राजाले परेवाको रक्षाको लागि भोको बाजलाई आफ्नू मासु दिदिए ॥९८॥ उहिले यस भूमण्डलमा जीमूतवाहन नामका राजा थिए । उनले पनि महात्मा गरुडलाई आफ्नू जीवन दिए ॥९९॥ त्यसकारण विद्वान् ब्राह्मणले दयालु हुनुपर्छ के शुद्ध ठाउँमा मात्रै मेघ वर्षन्छ, अशुद्ध ठाउँमा वर्षदैन ? ॥१००॥ के चाण्डालहरूको अशुद्ध घरमा चन्द्रमाले उज्यालो

तस्मादहं शुनीमतां याचन्तीं न पुनः पुनः ॥१॥ उद्धारेष्ये निजैः पुण्यैः पङ्कमग्नां च गां यथा । इति पुत्रं निराकृत्य प्रतिजज्ञे महामतिः ॥२॥ दत्तं दत्तं महापुण्यं द्वादशीदिनसम्भवम् । शुनि गच्छ हरेर्धाम निर्धूताखिलकल्मषा ॥३॥ तद्वाक्यात्सहसा भूप दिव्याभरणभूषिता । विमुच्य देहं जीर्णं तु दिव्यरूपधरा शुभा ॥४॥ शतादित्यप्रभा जाता सावित्रीप्रतिमा यथा । जगामामन्त्र्य तं विप्रं द्योतयन्ती दिशो दश ॥ ५ ॥ भुक्त्वा दिवि महाभोगान् पश्चाज्जाता महीतले । नरनारायणाद्देवादुर्वशी नामनामतः ॥ ६ ॥ वैशाखशुक्लद्वादश्याः प्रभावेण वराङ्गना । देवानां च

पार्दैन ? त्यसकारण बार-बार हाम्रो दया माँग्ने (चाहने) यस कुकुर्नीलाई म ॥१०१॥ आफ्ना पुण्यहरूले-'हिलामा भासिएकी गाईलाई झैं—उद्धार गर्नेछु । त्यसरी छोरालाई हप्काएर बुद्धिमान् पद्मनिधिले प्रतिज्ञा गरे ॥१०२॥ वैशाख शुक्लद्वादशीका दिन प्राप्त गरेको महापुण्य दिएँ, दिएँ । हे कुकुर्नी ! त्यसै पुण्यका प्रभावले अब समस्त पाप पखालिएकी निष्पापिनी तँ हरि भगवान्‌को धाममा जा ॥१०३॥ हेराजन् ! पद्मनिधिका ती वाक्यले एकाएक पुरान् देह त्यागेर राम्रा गहनागुरियाले सजिएकी ऊ खूब राम्रो दिव्यरूप धारण गरी ॥१०४॥ मानौं सावित्री जस्ती भएकी छँदी सय सूर्यको प्रभा जस्तो चहकिली भई र ती पद्मनिधिसँग जाने आज्ञा लिएर दशै दिशा झकझक पार्दै स्वर्ग गई ॥१०५॥ स्वर्गमा ठूलाठूला भोग भोगेर पछि पृथ्वीतलमा नरनारायण धौताबाट 'उर्वशी' भन्ने नामले जन्मी ॥१०६॥ वैशाखशुक्ल द्वादशीमा गरेका





प्रिया जाता अप्सरत्वं च सा ययौ ॥७॥ यद्योगिगम्यं हुतभुक्प्रकाशं वरं वरेण्यं परमार्थरूपम् । यत्प्राप्य सन्तोऽपि हि यान्ति मुग्धं तत्प्राप्य रूपं च शुनीह देवी ॥८॥ पश्चात् स पद्मबन्धुर्हि तां तिथिं पुण्यवर्धिनीम् । लोके प्रख्यापयामास मधुद्विट्प्राणवल्लभाम् ॥९॥ कोटीन्दुसूर्यग्रहणाधिकाढ्या समस्तपुण्याधिकपुण्यरूपा । यज्ञैः समस्तैरतिरिच्यमाना द्विजेन ख्याता भुवनत्रये च ॥११०॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे शुनीमोक्षप्राप्तिर्नाम
चतुर्विंशोऽध्यायः ॥२४॥

पुण्यका प्रभावले अति सुन्दरी त्यो स्त्री देउताहरूको पनि प्यारी भएर अप्सरा भई ॥१०७॥ जुन रूप योगीहरूले चिताइन्छ, जुन रूप आगोको प्रकाश जस्तो परमार्थरूपको अति चम्किलो श्रेष्ठ छ, जुन रूप पाएरसन्तहरू पनि मुग्ध हुन्छन् त्यहीरूप त्यस कुकुर्नी स्त्रीले पाई ॥१०८॥ पछि ती पद्मबन्धुले विष्णु भगवान्‌को प्राण जस्तै प्यारो, पुण्य बढाउने वैशाख शुक्लको त्यस द्वादशी तिथिलाई संसारमा प्रख्यात गराए ॥१०९॥ करोडौं चन्द्र-सूर्य ग्रहणभन्दा पनि अधिक श्रेष्ठ, समस्त पुण्यभन्दा पनि अधिक पुण्यहरू भएको सम्पूर्ण यज्ञहरूले पनि बढी मानिने त्यो द्वादशी तिथिलाई तीनै भुवनमा पद्मनिधि बाहुनले विख्यात गराए ॥११०॥

श्रीस्कन्दपुराणको वैशाखमाहात्म्यमा नारद र अम्बरीषको संवादमा शुनिमोक्ष प्राप्ति नामको चौबीसौं अध्याय सकियो ॥२४॥

# अथ पञ्चविंशोऽध्यायः

श्रुतदेव उवाच—यास्तिस्रस्तिथयः पुण्यां अन्तिमाः शुक्लपक्षके। वैशाखमासि राजेन्द्र पूर्णिमान्ता शुभावहाः ॥ १ ॥ अन्त्याः पुष्करिणीसंज्ञाः सर्वपापक्षयावहाः। माधवे मासि यः पूर्णं सम कर्तुं न च क्षमः ॥ २ ॥ तिथिष्वेतासु स स्नायात्पूर्णमेव फलं लभेत् सर्वे देवास्त्रयोदश्यां गर्जन्तस्तं पुनन्ति हि ॥ ३ ॥ चतुर्दश्यां सयज्ञाश्च देवा एनम् पुनन्ति हि। पूर्णायां पर्वतीर्थाश्च विष्णुना सह संस्थिताः ॥ ४ ॥ ब्रह्मघ्नं च सुरापं वा सर्वानितान् पुनन्ति हि। एकादश्यां पुरा जज्ञे वैशाख्याममृतं शुभम् ॥ ५ ॥ द्वादश्यां पालितं तच्च विष्णुना मोहरूपिणा।

श्रुतदेवजीले भन्नुभयो – हे राजेन्द्र! वैशाख महीनामा शुक्लपक्षका पूर्णिमासम्मका अन्तिम जुन तीन तिथि हुन् ती अति कल्याणकारी पवित्र तिथि हुन्॥१॥ सम्पूर्ण पापलाई नाश गर्ने अन्त्यका ती तिथिहरू पुष्करिणी कहिन्छन्। वैशाख महीनामा जो मनुष्य महीनैभरि पूरा न्वाहुन असमर्थ छ॥२॥उसले यी तीन तिथिहरूमा न्वाह्यो भने महीनाभरि न्वाहे जस्तै पूरा फल पाउँछ। सबै धौताहरूले त्रयोदशीमा गर्जिएर त्यस दिनलाई पवित्र पार्छन् ॥ ३ ॥ चतुर्दशीमा यज्ञ गर्ने भएका देवताहरूले यस दिनलाई पवित्र पार्छन्। पूर्णिमाका दिन विष्णुका साथमा रहेका पर्व र तीर्थहरू ॥ ४ ॥ ब्रह्महत्या गर्ने, रक्सी पिउने यस्ता सबैलाई पवित्र पार्छन्। उहिल्यै वैशाखशुक्लको एकादशीमा नै कल्याणकारी अमृत उत्पन्न भएको थियो ॥५॥ द्वादशीका दिन विष्णुले मोहनी रूपले त्यस अमृतलाई रक्षा गरेका थिए अर्थात् दैत्यहरूबाट



---



त्रयोदश्यां सुधां देवान् पाययामास वै हरिः ॥ ६ ॥ जघान च चतुर्दश्यां दैत्यान् देवविरोधिनः। पूर्णायां सर्वदेवानां साम्राज्याप्तिर्बभूव ह ॥ ७ ॥ ततो देवाः सुसन्तुष्टा एतासां च वरं ददुः। तिसृणां च तिथीनां वै प्रीत्योत्फुल्लविलोचनाः ॥८॥ एता वैशाखमासस्य तिस्रश्च तिथयः शुभाः। पुत्रपौत्रादिफलदा नराणां पापहानिदाः ॥ ९ ॥ यो माधवे तु सम्पूर्णे न स्नाति मनुजाधमः। तिथित्रयेऽपि स स्नात्वा पूर्णमेव फलं लभेत् ॥१०॥ तिथित्रयेऽप्यकुर्वाणः स्नानदानादिकं नरः। चाण्डालीं योनिमासाद्य स भवेद्ब्रह्मराक्षसः ॥११॥ उष्णोदकेन यः स्नाति माधवे च

बचाएका थिए। यो अमृत हरि भगवान्ले त्रयोदशीमा धौताहरूलाई प्याएका थिए॥६॥धौताका विरोधी दैत्यहरूलाई चतुर्दशीमा भगवान्ले मार्नुभएको थियो र पूर्णिमाका दिन सबै देवताहरूलाई आफ्नू साम्राज्य प्राप्त भएको थियो ॥७॥ त्यसैले असाद्धै खुशी भएका, प्रीतिले आँखा खिलेका देवताहरूले यी तीन तिथिहरूलाई 'वैशाख महीनाका यी तीन शुभ तिथिहरू मनुष्यहरूको पापनाशिदिउन् र उनीहरूलाई छोरा नाति आदि फल दिने होउन्' भनी वर दिएका थिए॥८-९॥ जो अधम मनुष्य सम्पूर्ण वैशाख महीनाभरि न्वाहुँदैन, उसले पनि तीन तिथिमा न्वाहेर पनि पूरै फल पाउँछ ॥ १० ॥ अन्त्यका यी तीन तिथिमा पनि स्नानदान आदि नगर्ने मानिस चाण्डालको कुलमा चाण्डालीबाट जन्मेर त्यो ब्रह्मराक्षस हुन्छ ॥११॥ वैशाखका ती तीन तिथिमा जो तातो पानीले न्वाहुँछ, त्यो मानिस चौध इन्द्र नबितुन्जेल रौरव नरकमा

तिथित्रये । रौरवं नरकं याति यावनिन्द्राश्चतुर्दश ॥ १२ ॥ पितॄन् देवान् समुद्दिश्य दध्यन्नं न ददाति यः । पैशाचीं योनिमासाद्य तिष्ठत्याभूतसम्प्लवम् ॥१३॥ प्रवृत्तानां च कामानां माधवे नियमे कृते । अवश्यं विष्णुसायुज्यं प्राप्यते नात्र संशयः ॥ १४ ॥ आमासं नियमाशक्तः कुर्यादेतद्दिनत्रये । तेन पूर्णफलं प्राप्य मोदते विष्णुमन्दिरे ॥ १५ ॥ यो वै देवान् पितॄन विष्णुं गुरुमुद्दिश्य मानवः । न स्नानादि करोत्यद्धा तस्मै शापप्रदा वयम् ॥२६॥ निःसन्तानो निरायुश्च निःश्रेयस्को भवेच्च सः । इति देवा वरं दत्त्वा स्वधामानि ययुः पुरः ॥ १७ ॥ तस्मात्ति

जाकिइरहन्छ॥१२॥पितृ र दौताहरूको उद्देश्य गरेर दही-अन्न जो दान गर्दैन, त्यो मनुष्य पिशाच योनिमा जन्मने त्यस कल्पको प्रलय नभएसम्म पिशाचै भएर रहन्छ ॥१३॥ वैशाख महीनामा नियमपूर्वक व्रतमा लागेका मासिहरूले अवश्यै पनि विष्णुको सायुज्य मुक्ति पाउँछ, यसमा कुनै संशय छैन॥१४॥ महीनाभरि नियममा रहन नसक्नेले पनि तीन दिन मात्रै पनि वैशाखका धर्म गऱ्यो भने,त्यसै तीन दिनका धर्मले वैशाखभरिको पूर्ण फल पाएर विष्णु भगवान्‌को मन्दिरमा रमाउनेछ॥१५॥जो मनुष्य दौता, पितृ, विष्णु, गुरुलाई उद्देश्य गरेर यी तीन दिनमा पनि स्नान दान आदि एक दिन पनि गर्दैन भने त्यसलाई हामीहरू श्राप दिनेछौं ॥४६॥ अवश्यै पनि त्यो मानिस सन्तान नभएको, आयु छोटिएको, कल्याणले रहित भएको हुनेछ । यसरी उहिले दौताहरूले यी तीन तिथिलाई वर दिई आफ्ना-आफ्ना धाममा गएका थिए





थित्रयं पुण्यं सर्वाघौघविनाशनम् । अन्त्यं पुष्करिणीसंज्ञं पुत्रपौत्रविवर्द्धनम् ॥ १८ ॥ या नारी सुभगाऽपूपपायसं पूर्णिमादिने । ब्राह्मणाय सकृद्दद्यात् कीर्तिमन्तं सुतं लभेत्॥१९॥ कुटुम्बभोजनं यस्तु गृही कुर्याद्दिनत्रये । दिने दिनेऽश्वमेधस्य फलमेति न संशयः ॥ २० ॥ सहस्रनामपठनं यः कुर्याच्च दिनत्रये । तस्य पुण्यफलं वक्तुं कः शक्तो दिवि वा भुवि ॥ २१ ॥ सहस्रनामभिर्देवं पूर्णायां मधुसूदनम् । पयसा स्नाप्य वै याति विष्णुलोकमकल्मषः ॥ २२ ॥ समस्तविभवैर्यस्तु पूजयेन्मधुसूदनम् । न तस्य लोकाः क्षीयन्ते युगकल्पादिव्यत्यये ॥ २३ ॥ अस्नात्वा चाप्यदत्वा

॥१७॥ त्यसै कारण अन्त्यका पुष्करणीनामक तीन तिथिहरू पुण्य दिने, सारा पापसमूहलाई सखाप पार्ने छोरा-नाति बढाउने शक्ति भएका छन्॥१८॥ जो सधवा नारी पूर्णिमाका दिन मालपूवा र खीर एकैपल्ट पनि दिन्छे भने उसले कीर्ति फिजिने छोरो पाउँछे॥१९॥ जो गृहस्थी यी तीन दिन आफ्ना कुटुम्बहरूलाई भोजन गराउँछ,त्यो दिन-दिनै अश्वमेधको फल पाउँछ, यसमा कुनै संशय छैन ॥ २० ॥ जो मनुष्य यी तीन दिन विष्णुसहस्रनाम पाठ गर्छ, त्यसका पुण्यको फल बखान्न स्वर्गमा या पृथ्वीमा को सक्छ ? अर्थात् कसैले सक्तैन॥२१॥ वैशाखी पूर्णिमाका दिन विष्णुसहस्रनाम पढ्दै मधुसूदन भगवान्‌लाई दूधले न्वाहिदिन्छ, उसले पापरहित भएर विष्णुलोकमा जान्छ ॥२२॥ जसले आफ्नू समस्त ऐश्वर्यले मधुसूदन भगवान्‌को पूजा गर्छ,युग र कल्प आदिको नाश हुँदा पनि त्यसका पुण्यलोकहरू क्षय हुँदैनन्॥२३॥नन्वाहीकन

च वैशाखी च गता यदि। स ब्रह्महा गुरुघ्नश्च पितॄणां घातकस्तथा ॥ २४ ॥ श्लोकार्धं श्लोकपादं वा नित्यं भागवतोद्भवम्। वैशाखे च पठन्मर्त्यो ब्रह्मत्वमुपपद्यते ॥ २५ ॥ यो वै भागवतं शास्त्रं शृणोत्येतद्दिनत्रये। न पापैर्लिप्यते क्वापि पद्मपत्रमिवाम्भसा ॥ २६ ॥ देवत्वं मनुजैः प्राप्तं कैश्चित्सिद्धत्वमेव च। कैश्चित्प्राप्तो ब्रह्मभावो दिनत्रयनिषेवणात् ॥ २७ ॥ ब्रह्मज्ञानेन वै मुक्तिः प्रयागमरणेन वा। अथवा मासि वैशाखे नियमेन जलाप्लुतेः ॥ २८ ॥ नीलं वृषं समुत्सृज्य वैशाख्यां च जलाप्लुतः। समस्तबन्धनिर्मुक्तः पुमर्थान्याति सर्वथा ॥ २९ ॥ गां दद्याद्यो

शास्त्र २९९ / मा० अ.२५

र दान नगरीकन यदि कसैले वैशाखी पूर्णिमा बिताएको छ भने, त्यो मनुष्य ब्रह्मघाती, गुरुघाती, पितृहरूको घातक हो ॥२४॥ वैशाख महीनामा यदि कुनै मनुष्यले श्रीमद्भागवतमा लेखिएको आधा श्लोक या श्लोकको एक पाउ नै भने पनि रोजै पढ्छ भने त्यसले ब्रह्मत्व प्राप्त गर्दछ ॥२५॥ जो मनुष्य यी तीन दिन भागवत शास्त्र सुन्दछ, त्यो मनुष्य—पानीले कमलको पात झैं—कहिल्यै पनि पापले लिपिँदैन॥२६॥वैशाख शुक्लका अन्तिम तीन दिन मात्रै पनि तिनमा गर्न बताइएका धर्म गर्नाले कति मनुष्यले देवत्व पाएका छन्,कतिले सिद्धत्व पाएका छन् भने कतिले त ब्रह्मा जस्तै पनि हुन पाएका छन् ॥२७॥ मुक्ति भन्ने कुरा ब्रह्मलाई जान्नाले हुन्छ, या प्रयागमा मर्नाले हुन्छ, अथवा वैशाख महीनामा नियमपूर्वक जलमा डुबुल्की लाउनाले नै हुन्छ ॥२८॥ वैशाखी पूर्णिमामा नदी तलाउहरूमा डुबी डुबी न्हाहेर यदि कसैले नीलो बहर साँढे छोड्छ भने उ समस्त सांसारिक बन्धनबाट छुट्छ र एकाएक सब पुरुषार्थ प्राप्त गर्छ ॥२९॥ जो मनुष्य बालबच्चा

१६

द्विजेन्द्राय सीदते च कुटुम्बिने। इहापमृत्युनिर्मुक्तः परत्र च परं व्रजेत् ॥ ३० ॥ स्नानदानविहीनैस्तु वैशाखीं चैव यो नयेत्। श्वानयोनिशतं प्राप्य विष्ठायां जायते कृमिः ॥ ३१ ॥ तिस्रः कोट्योऽर्द्धकोटिश्च तीर्थानि भुवनत्रये। सम्भूय मन्त्रयाञ्चक्रुः पापसंघातशङ्किताः ॥ ३२ ॥ जना अस्मासु पापिष्ठा विसृजन्ति स्वकं मलम्। तदस्माकं कथं गच्छेदिति चिन्तासमन्विताः ॥३३॥ तीर्थपादं हरिं जग्मुः शरण्यं शरणं विभुम्। स्तुत्वा च बहुभिः स्तोत्रैः प्रार्थयामासुरञ्जसा ॥३४॥ देवदेव जगन्नाथ सर्वाघौघविनाशन। जना अस्मासु पापिष्ठाः स्नात्वा पापानि सर्वशः ॥ ३५ ॥

वैशाख ३०० / मा० अ.२५

हुने गरीब संयमी बाहुनलाई गाई दिन्छ, यस लोकमा उसको अकाल मृत्यु हुँदैन र परलोकमा पनि परमपद पाउँछ ॥ ३० ॥ जो मनुष्य वैशाखी पूर्णिमामा स्नान दान क्यै नगरीकन त्यो दिन त्यसै बिताउँ, त्यो सय पछि सयपल्टसम्म कुकुरको जन्म पाएर अनि गुहुमा कीरा हुन्छ ॥३१॥ तीनै भुवनमा गरी जम्मा साढे तीन करोड तीर्थहरू छन्। आफूमा थुप्रिएका पापले डराएका तिनीहरूले कुनै दिन भेला भएर आपसमा सल्लाह गरे–॥३२॥पापी मनुष्यहरू आफ्नू पापरूपी मल हामीमा छोडिदिन्छन्, तिनीहरूले छोडेको हामीहरूको त्यो त्यो पाप कसरी जाला भन्ने चिन्ताले तीर्थहरू ॥ ३३ ॥ चरणकमलै तीर्थ हुने हरिसाथौं गए र शरणमा आएकाका शरण विभु भगवान्लाई धेरै धेरै स्तोत्रहरूद्वारा स्तुति गरेर त्यस पछि तुरुन्तै प्रार्थना गर्न थाले —॥३४॥ हे देवताका पनि देवता! हे जगत्का नाथ! हे सारा पापसमूहलाई नाश गर्ने भगवान्! पापी मानिसहरू हामीहरूमा न्हाहेर सारा पाप जति ॥३५॥ हामीमै त्यागेर संसारमा तपाईंको आज्ञा पालन

विसृज्य त्वत्पदं यान्ति त्वदीत्राधारिणो भुवि । अस्माकं चैव तत्पापं कथं गच्छेज्जनार्दनः ॥३६॥ प्रहसन्प्राह तीर्थानि मेघगम्भीरया गिरा ॥ ३७ ॥ श्रीभगवानुवाच । सिते पक्षे मेषसूर्ये वैशाखान्ते दिनत्रये । सर्वतीर्थमये पुण्ये ममापि प्राणवल्लभे॥३८॥ यूयं भोगदयात्पूर्वं बहिःसंस्थजला लुताः । विमुक्ताघः पुण्यरूपा भवन्त्याशु सुनिर्मलाः ॥ ३९ ॥ भवद्भिश्च विमुक्ताघैर्ये न स्नाता दिनत्रये । तेषु तिष्ठतु तत्पातं जनैर्युष्मद्भिरेचितम् ॥४०॥ इति तीर्थपदो विष्णुस्तीर्थानां च वरं ददौ । अनुज्ञाप्य च तान्याशु यत्रैवान्तरधीयत॥४१॥स्वधामानि पुनः प्रापुस्तानि तीर्थानि नित्यशः॥४२

गर्नेहरू तपाईंको चरणकमलमा प्राप्त हुन्छन् ! हे जनार्दन हामीहरूमाथि थुप्रिएका त्यो पापचाहिं कसरी हट्ला ? ॥३६॥ यति सोधिएका भगवान् मेघ जस्तो गम्भीर वाणीले मुस्कुराउँदै तीर्थहरूलाई भन्नुभयो ॥ ३७ ॥ भगवानले भन्नुभयो— मेष राशिमा सूर्य रहेका वेला सारा तीर्थ तुल्य भएका, पुण्यैपुण्यले भरिएका, मैले पनि प्राण जस्तै प्यारा गरिएका वैशाख शुक्लपक्षका अन्तिम तीन दिनमा॥३८॥ तिमीहरू सूर्योदयभन्दा पहिल्यै मिर्मिरेमै घरबाहिर रहेका नदी-तलाउमा न्वाहेर तुरुन्तै पापरहित पुण्यशाली निर्मल होऊ॥३९॥त्यसरी पापदेखि छुटकारा पाएका तिनीहरूमध्ये पनि जसले प्रत्येक वर्षको तीन दिन न्वाहुँदैन; मनुष्यहरूले तिमीहरूमा छोडेका त्यो पाप तिनै नन्वाहुनेमा रहोस्॥४०॥यस्ता प्रकारले चरणकमल नै तीर्थ हुने विष्णुले तीर्थहरूलाई वर दिनुभयो र तिनीहरूलाई अह्राउने कुरो अह्राएर तुरुन्तै त्यहीं अल्पिनुभयो॥४१॥तीर्थहरू पनि सधैंका लागि फेरि आआफ्ना धाममा पुगे॥४२॥त्यहाँ देखि सारा तीर्थहरू प्रत्येक वर्ष वैशाख महीनामा र





प्रतिवर्षन्तु वैशाखे तथैवान्त्यदिनत्रये ॥ विष्ण्वाज्ञप्ताः प्रकुर्वन्ति प्रातःस्नानं भगोदये ॥४३॥ तेनाघौघं विमुच्यैव यान्ति निर्मलतामहो । ये तु स्नानं न कुर्वन्ति वैशाखान्त्यदिनत्रये । तं भवन्तु समस्तानां जनानां पातकाश्रया ॥ ४४ ॥ इति शापं च तीर्थानि ह्यस्नातानां ददन्ति च । न तेन सदृशः पापो यो न स्नातो दिनत्रये ॥ ४५ ॥ विचारितेषु शास्त्रेषु न दृष्टो न च श्रुतः । तस्माद्दिनत्रये कार्यं स्नानदानार्चनादिकम् ॥ ४६ ॥ अन्यथा नरकं याति यावदिन्द्राश्चतुर्दश । इत्येतत्सर्वमाख्यातं श्रुतकीर्ते महीपते ॥४८॥ पृष्टं वैशाखमाहात्म्यं यथादृष्टं

विशेष गरी उसका अन्तिम तीन दिनमा विष्णुको आज्ञा अनुसार सूर्योदयभन्दा पहिल्यै प्रातः स्नान गर्दछन्॥४३॥त्यसैले पाप-समूहलाई त्यागर अत्यन्त निर्मल ( कञ्चन ) तामा प्राप्त हुन्छन् । जो मानिसहरू वैशाखका अन्तिम तीन दिनमा पनि न्वाहुँदैनन् ती मानिसहरू समस्त पापीहरूको पाप रहने ठाउँ होऊन् ॥४४॥ यस प्रकार श्राप तीर्थहरूले वैशाखका अन्तिम तीन दिनमा पनि नन्वाहुनेहरूलाई दिएका छन् । वैशाखमा अन्तिम तीन दिनमा पनि जो न्वाहुँदैन, त्यो जस्तो पापी अरू कोही हुन्न । सकल शास्त्रमा विचार गर्दा यी तीन दिनमा नन्वाहुनु जस्तै पाप न देखिएको छ, न सुनिएको छ । त्यसकारण ती दिनमा स्नान दान पूजा पाठ आदि कार्य गर्नेपर्छ ॥ ४५-४६ ॥ यदि कोही गर्दैन भने त्यो जन चौधै इन्द्र रहुन्जेल नरकमा जान्छ । हे श्रुतकीर्ति महाराज ! तपाईंले सोधिएको वैशाख माहात्म्यको विषयमा आफूले जस्तो देखेको र जस्तो सुनेको थिएँ यो सब कुरो मैले बताएँ । वैशाखका माहात्म्यको बारेमा यो

यथाश्रुतम् । माहात्मस्य च लेशोऽयं माधवस्यानुवर्णितः ॥ ४८ ॥ कात्स्न्र्योद्वक्तुं ब्रह्मणापि नालं वर्षशतैरपि । पुरा कैलासशिखरे पार्वत्यै शङ्कर स्वयम् ॥४९॥ प्राह माधवमाहात्म्यं पृच्छत्यै शतवत्सरम् । तथापि नान्तमगमदशक्तो विरराम ह ॥ ५० ॥ कोऽनुवर्णयितुं शक्तः कात्स्न्र्यामाहात्ममुत्तमम् । विना विष्णुं जगन्नाथं नारायणमनामयम् ॥ ५१ ॥ पुरा सर्वेऽपि ऋषया महात्म्यं पापनाशनम् । लेशं लेशं च व्याचख्युर्जनानां हित काम्यया ॥ ५२ ॥ नान्तः केनापि व्याख्यातो ह्यशक्तत्वान्महीपते । त्वं च मासे तु वैशाखे कुरु दानादिसत्क्रियाः ॥ ५३ ॥

मैले लेश (अलिकति) मात्र वर्णन गरेको हुँ ॥४७-४८॥ पूरापूर वर्णन गर्न त सय वर्ष लगाएर खास ब्रह्माले नै भने पनि सक्दैनन् । उहिल्यै कैलासको टाकुरामा वैशाख-महीना सोध्ने भएकी पार्वतीलाई खास शङ्करले नै सय वर्षसम्म वैशाख महीनाको माहात्म्य बताउनुभयो तैपनि सकिएन र थाकेर बताउन छोडिदिनुभयो॥४९-५०॥ जगत्का नाथ, अविनाशी, नारायण,विष्णुलाई छोड़ेर यस उत्तम माहात्म्यलाई पूरापूर वर्ण गर्न को सक्छ? अर्थात् विष्णु-विना अरू कोही पनि सक्दैन ॥५१॥उहिले-उहिले पनि मनुष्यहरूको भलाई होस् भन्ने इच्छाले सबै ऋषिहरूले यो पाप नाश्ने वैशाखको माहात्म्यलाई अलि-अलि मात्र वर्णन गरेका थिए॥५२॥ हे राजन् ! नसकिने हुनाले शुरूदेखि आखिरसम्म त कसैले पनि वर्णन गरेको छैन । त्यसकारण तपाई पनि वैशाख महीनामा दान आदि असल कामहरू गर्ने गर्नुहोस् ॥५३॥ त्यस पुण्यले भुक्ति र

---



तेन भुक्तिं च मुक्तिं च संप्राप्स्यमि न संशयः । इति तं बोधयित्वा च मैथिलं जनकाह्वयम् ॥५४॥ श्रुतदेवस्तमामन्त्र्य गन्तुं चक्रे मनस्तदा । जाताह्लादः स राजर्षिर्गलद्बाष्पाकुलेक्षण ॥ ५५ ॥ उत्सवं कारयामास स्वाभिवृद्धये मनोरमम् । पुरं प्रदक्षिणीकृत्य शिविकामधिरोप्य तम् ॥ ५६ ॥ चतुरङ्गबलैर्युक्तं स्वयं पृष्ठमभान्वगात् । पुनश्चान्तःपुरं प्राप्य सकलैर्विभवैरपि ॥ ५७ ॥ वस्त्रैराभरणैश्चैव गोभूतिलहिरण्यकैः । प्रणम्य च परिक्रम्य तस्थौ प्राञ्जलिरग्रतः ॥ ५८ ॥ ततः स तु महातेजाः श्रुतदेवो महायशाः । सन्तुष्टः परमप्रीतो ययौ धाम स्वयं मुनिः ॥५९॥ नारद

मुक्ति दुवै पाउनेछौ, यसमा, कुनै संशय छैन । यस्ता प्रकारले जनक नाम गरेका ती मैथिल राजालाई बुझाएर ॥५४॥ राजासँग आज्ञा लिएर श्रुतदेवले जाने मन गरे तब अत्यन्त खुशी भएर आँसु डबडबाउनाले आकुल हेराइ भएका ती राजर्षिले॥५५॥ आफ्नू कल्याणका लागि ती ऋषिलाई पालकीमा बसाएर, शहर प्रदक्षिणा गराए अति राम्रो उत्सव गराए ॥५६॥चारै अङ्गवाला सेनाले सहित भएर स्वयम् आफू पनि पछि-पछि गए। अनि अन्तःपुर (भित्री कोठा) मा लगेर सब प्रकारका ऐश्वर्यले; ॥५७॥ जस्तै वस्त्र, अलंकारहरूले र गाई, भुमि, तिल, सुन आदिले पूजा गरी, ढोगी, परिक्रमा गरी हात जोडेर अगाडि रहे ॥ ५८ ॥ तब तेजस्वी, ठूला यशस्वी ती श्रुतदेव मुनि सन्तुष्ट भएर प्रसन्नतापूर्वक आफ्नू धाममा गए ॥५९॥ नारदले भने —हे अम्बरीष ! सुन्नाले सबै पाप नाश हुने र सबै सम्पत्ति मिल्ने उत्तम यो आख्यान तिमीलाई

उवाच । इत्येतत्परमाख्यातमम्बरीष तवोदितम् । श्रवणात्सर्वपापघ्नं सर्वसम्पद्विधायकम् ॥ ६० ॥ तेन भुक्तिं च मुक्तिं च ज्ञानं मोक्षं च विन्दसे । इति तस्य वचः श्रुत्वा अम्बरीषो महायशाः ॥ ६१ ॥ प्रहृष्टान्तरवृत्तिश्च बाह्यव्यापारवर्जितः । प्रणनाम तथा मूर्ध्ना दण्डवत्पतितो भुवि ॥ ६२ ॥ विभवैरखिलैश्चापि पूजयामास तं पुनः । सम्पूजितस्तमामन्त्र्य नारदो भगवान्मुनिः ॥ ६३ ॥ लोकान्तरे ययौ धीमान् शापान्नैकत्र संस्थितिः । अम्बरीषोऽपि राजर्षिर्नारदोक्तानिमान् शुभान् ॥ ६४ ॥ धर्मान् कृत्वा विलीनोऽभूत्परे ब्रह्मणि निर्गुणे ॥ ६५ ॥ सूत उवाच ।

मैले यस किसिमले विस्तारपूर्वक सुनाएँ।।६०।। त्यसले गर्दा भुक्ति र मुक्ति अनि ज्ञान र मोक्ष पनि पाउनेछौ । नारदको यस्तो वचन सुनेर महायशस्वी अम्बरीष॥६१।।बाहिरी चहलपहलले रहित एकाग्र चित्तका हुँदै भित्रैदेखि खुशी भएर भूइमा लौरो झैं पसारिएर शिरले नमस्कार गरे अर्थात् साष्टाङ्ग दण्डवत् गरे ॥ ६२ ॥ र फेरि सारा ऐश्वर्यले ती नारदलाई पूजा गरे । अम्बरीषले पूजा गरिएका भगवान् नारद मुनिले,अम्बरीषसँग बिदा मागेर।।६३।।अरू नै लोकमा गए,किनकि ती बुद्धिमान् श्रापले गर्दा एकै ठाऊँ बस्न सक्नेनथे । राजर्षि अम्बरीष पनि नारदले बताएका ती कल्याणकारी॥६४॥धर्महरू गरेर निर्गुण परब्रह्ममा विलीन भए तब ।।६५।।सूतजीले भन्नुभयो पाप नाश गर्ने, पुण्य बढाउने उत्तम आख्यान जो

---





य इदं परमाख्यानं पापघ्नं पुण्यवर्धनम् । शृणुयाद्वा पठेद्वापि स याति परमां गतिम् ॥ ६६ ॥ लिखितं पुस्तकं येषां गृहे तिष्ठति मानद । तेषां मुक्तिः करस्था हि किंतु तच्छ्रवणादिना ॥६७॥

इति श्रीस्कन्दपुराणे वैशाखमाहात्म्ये नारदाम्बरीषसंवादे फलश्रुतिकथनं नाम पञ्चविंशोऽध्यायः ॥ २५ ॥ इति वैशाखमाहात्म्यं सम्पूर्णम् । श्रीमाधवार्पणमस्तु ॥ शुभं भवतु ॥

मनुष्य सुन्दछ अथवा पढछ त्यो परम गतिमा प्राप्त हुन्छ ॥ ६६ ॥ हे शौनक ! जुन मनुष्यहरूको घरमा वैशाख माहात्म्यको लिखित पुस्तक रहन्छ, तिनीहरूका लागि मुक्ति त आफ्ना हातमा रहन्छ । फेरि वैशाख माहात्म्य सुन्यो सुनायो भने कयौँ भन्ने कुरै छैन, त्यो त सरासर मुक्त भैहाल्छ ।।६७।।

श्री स्कन्दपुराणको वैशाख माहात्म्यको नारद र अम्बरीष सम्वादमा महिमा कथन नामको पचीसौं अध्याय सकियो ॥ २५ ॥
श्रीमाधवार्पणमस्तु । शुभं भवतु ॥ श्रीकृष्णार्पणमस्तु ॥इति॥ श्रीएकदेव उपाध्याय द्वारा वह्निवैश्वानरव्योमविलोचन विक्रममा कथा भन्ने शैलीले लेखिएको वैशाख माहात्म्यको भाषाटीका सकियो ॥

# वैशाख शुक्ल तृतीयाको व्रतविधि

अक्षय तृतीयाका दिन चन्दन, अक्षता, फूल, धूप-दीप, नैवेद्य आदिले जगतगुरू नारायणको पूजा गर्नुपर्छ । जो जन यस दिन सुगन्धित शर्वत दान गर्छ, ऊ सूर्यलोकमा जाने छ । यस तृतीयामा गङ्गास्नान गर्नाले सब पापबाट छुट्तछ । यस दिन स्नान-दान, जप, हवन, पठन-पाठन, पितृतर्पण आदि जुन पनि पुण्य कर्म गरिन्छ, त्यसको क्षय हुँदैन । सत्ययुगको आरम्भ यसै तिथिदेखि भएको थियो, यसैले यसको नाउँ 'युगादि' हो । यो पाप खाने दिन हो । यस तिथिको बारेमा यसै दिनमा सत्तू शर्वत खाइरहेको वेला युधिष्ठिरद्वारा, यसको अर्थ (मतलब) सोधिएका श्रीकृष्णले युधिष्ठिरलाई यस्तो इतिहास सुनाउनुभएको थियो––अघि कुनै समयमा अति दरिद्र, प्रिय बोल्ने, देवता र ब्राह्मणको भक्त 'महोदय' नामको कोही व्यापारी थियो । यद्यपि ठूला परिवारवाला थियो, तथापि उसले धर्ममा मन लाएर पण्डितहरूका मुखबाट रोहिणी नक्षत्र युक्त यस तृतीयाको कथा सुन्यो । रोहिणी नक्षत्र र बुधवार समेत परेको छ भने यो अति ठूलो फल दिने हुन्छ । हे युधिष्ठिर ! यस्तो तृतीयामा जो दान-धर्म गरिन्छ त्यो कहिल्यै

खिइन्न । यस्तो त्यस व्यापारीले सुनेर गङ्गास्नान गरी परिवारमा आपक्त स्त्रीले छेत्ताछेक्नै पनि उक्त व्यापारीले शुद्ध मनले ब्राह्मणको पूजा गरी उनलाई अन्नका साथ जल भरिएको अँखरा र अन्नका साथै सुगन्धित शर्वतले भरिएको घैला ( ग्राग्री ) पनि दान दियो र शक्तिपूर्वक जौ, गहुँ, चना, जौको सातू मिठाई, सुनको औंठी र दही-भात भोजन गराउनका लागि प्रशस्त दही सहित सबै परिकारले युक्त भएको बढिया सीधा दक्षिणा सहित दान दियो । त्यसपछि सँसारलाई मिथ्या जानेर सात्त्विक धर्ममा रहिरहेको ऊ पछि परमेश्वरलाई स्मरण गर्दै देह छाड्यो । अर्को जन्ममा त्यो पसलेले कुशावती नामको नगरोमा क्षत्रिय कुलमा जन्म लियो । एकदम धनी उसले धेरै-धेरै दक्षिणा दिई अनेक प्रकारका यज्ञहरू गऱ्यो । असंख्य गाई र सुवर्ण दान गऱ्यो । कैयन् मगन्ते र अन्धाहरूलाई प्रसन्न पाऱ्यो । अनेक प्रकारका सुखभोग भोग्यो । दरिद्री अवस्थामा अक्षय तृतीयाका दिन कतिकति गरेको दानले पनि उसको अर्को जन्ममा पनि जति दान गरे पनि नघट्ने धन भयो । हे युधिष्ठिर ! यसैकारण यस तृतीयामा तीर्थमा न्वाहेर पितृरूलाई तर्पण दिई एक छाक हविष्य खाई, पूजाविधिपूर्वक वासुदेव भगवान्को पूजा

वसन्तमा पाक्ने अन्नहरू र ग्रीष्ममा फल्ने फलहरूका साथ जलले भरिएको घड़ा, सुगन्धित शर्बतले भरिएको अँखरा, छाता, जुत्ता, पँखा जौंको परिस्कृत सातु, सके धोती, उपर्ना, लौरो र अरू पनि स्वादिला वस्तुहरू, हुती हुनेले गाई, सुन आदि वस्तु पनि ती तीं मन्त्रले पूजा टीका लगाइएको ब्राह्मणलाई श्रद्धाले जो सकेको दान दिनुपर्छ। यसमा गरेको सबै कुरो नाश नहुने नघट्ने भएकोले नै यसको नाम 'अक्षय-तृतीया' भएको हो।

सूचना—यस पुस्तकको पृष्ठ २०२ पछि २०३ र २०४ हुनुपर्नेमा २०५ देखि भएको छ तापनि कथामा फरक परेको छैन। सहृदय पाठक स्वयं सच्याउनु हुनेछ भन्ने आशा छ।